# इस्लाम सर्वश्रेष्ठ धर्म

[ **नेपाली -** Nepali - نيبالي ]


**डा.अब्दुल अजीज बिन मुहम्मद बिन इब्राहीम अल् उवैद**

**अनुवादकः अतीकुर्रहमान मो.इदरीस खान मक्की**

**संशोधकः मुहम्मद इदरीस सलफी**



2013 - 1435

IslamHouse.com

# الإسلام الدين العظيم

« باللغة النيبالية »

د.عبد العزيز بن محمد بن إبراهيم العويد

ترجمة: عتيق الرحمن محمد إدريس خان مكي

مراجعة: محمد إدريس سلفي

2013 - 1435

IslamHouse.com

بسم الله الرحمن الرحيم



पुस्तक पाइने ठेगाना -:
इस्लामिक गाइडेन्स सेन्टर कपिलवस्तु नगरपालिका
व.नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)
सम्पर्क नं. ००९७७-९८४७०३०७८०
९७२७६४९२३८
इस्लामिक गाइडेन्स सेन्टर रबवा अल् रियाज
सउदी अरबीया

# अनुवादकको विचार

अलहम्दो लिल्लाहे नहमदोहु व नस्तईनोहु व नस्तगफिरहु व नऊजो बिल्लाहे मिन शोरूरे अनफोसेना व मिन सईयाते आमालेना, मैंयहदेहिल्लाहो फलामोजिल्ला लहु व मैंयुजलिल्हो फला हादिया लहु व अश्हदोअल्लाइलाहा इल्लल्लाहो व अश्हदो अन्ना मोहम्मदन् अब्दहु व रसूलहु । (अम्मा बअ्द)

हरेक प्रकारको प्रशंसा अल्लाहको लागि छ जसले सर्म्पूण ब्रह्माण्डलाई उत्पन्न गऱ्यो, र अल्लाहको शान्ति अवतरित होस् अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम र उहाँको घर परिवार र साथीहरू माथि र उनी सबैहरू माथि जुन यस इस्लामको प्रचार प्रसार गरे र मुहम्मदको पद्धतिलाई उत्तम मानी उसै माथि हिंडी आफ्नो जीवन व्यतीत गरे ।

प्रस्तुत पुस्तक **इस्लाम सर्वश्रेष्ठ धर्म** वास्तवमा सर्वव्यापी धर्म हो, र पालनकर्ताले हाम्रो लागि रोजेको धर्म इस्लाम नै हो, र यो नै प्रत्येक संदेष्टाको धर्म थियो आदम देखि मुहम्मद समेत सबैको धर्म वास्तवमा इस्लाम नै हो, र यो धर्म नै सत्य धर्म हो, र अल्लाह यस बाहेक अरु धर्मलाई स्वीकार गर्ने छैनन् । उपरोक्तका यस्ता सबै कुराहरूलाई लेखकले यस पुस्तकमा प्रमाण सहीत पुष्टि गर्ने प्रयास गरेका छन् ।

मलाई आशा छ कि यो सानो पुस्तकबाट तपाईहरूलाई सत्यको ज्ञान हुने छ । र यो पुस्तक तपाईहरूको लागि लाभप्रद सिद्ध हुनेछ । अल्लाह सित विन्ती छ कि मेरो यो सानो प्रयासलाई

कबूल गरी मेरो र मेरो घरपरिवारका समस्त सदस्यहरूको मुक्तिको माध्यम बनाउन्, र विशेष गरी मेरो आमा बुवालाई आफ्नो विशेष कृपाको पात्र बनाउन् जहाँहरूको मोह मायाले गर्दा नै म यस योग्य भएको छु कि अल्लाहको धर्मलाई सर्वसाधारण सम्म पुऱ्याऊँ र अनभिज्ञ एवं भ्रमित व्यक्तिहरूलाई सुमार्ग देखाऊँ। हे अल्लाह हाम्रा आमा बुवा र घरका अन्य सदस्यहरूलाई मुक्ति प्रदान गरी स्वर्गमा स्थान प्रदान गर (आमीन)


**अनुवादक**

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगरपालिका वार्ड न.९ महुवा**

**तौलिहवा कपिलवस्तु नेपाल**

**मो.नं. ००९७७–९८४७०३०७८०**

**Mob.00977-9847030780**

# इस्लाम ईश्वरीय धर्म

यस संसारमा विभिन्न प्रकारका धर्महरू छन्, त्यस मध्ये कतिपय मनुष्यले बनाएका मिथ्या धर्म हुन्, त कतिपय ईश्वरीय धर्म । तर इस्लाम सबैमाथि उत्कृष्ट छ किनकि यो अल्लाहले प्रदान गरेको र मन पराएको सर्वोत्कृष्ट धर्म हो, किन भने मनुष्यले बनाएको धर्मलाई सत्य भन्न सकिदैन किनकि मनुष्य त्रुटि गर्न सक्छ, र त्यस धर्ममा आफ्नो लागि लाभन्वित कुराहरू राख्न सक्छ, र आर्कोलाई हानि पुऱ्याउने समाग्री राख्न सक्छ । र इस्लाम भन्दा पहिलाका ईश्वरीय धर्महरूमा त्यसको अनुयायीहरूले थपघटगरेर नष्ट गरिहाले, अर्थात जस धर्मलाई अल्लाहले अवतरित गरेका थिए त्यो त्यसै अवस्थामा बॉकी रहेन जुन अवस्थामा अल्लाहले अवतरित गरेका थिए । यसै कारण यो इस्लाम धर्म ती सबै धर्मलाई स्थगित गरी आफ्नो प्रकाशबाट सम्पूर्ण संसारलाई टल्काउन ( प्रकाशमय बनाउन) अवतरित भयो । इस्लाम आफ्नो समस्त निर्देशन समेत ईश्वरीय हो । अल्लाहले यो धर्मको निर्माण एवं सृजना गर्नुमा कसैलाई साझीहुन अनुमति प्रदान गरेनन् चाहे त्यो जुन सुकै पनि होस् । अर्थात नबी, वली, फरिश्ता आदिलाई पनि त्यसको धर्ममा केही थपघट गर्न आज्ञा छैन ।

र अल्लाहले नै यस सम्पूर्ण संसारको रचना गऱ्यो , र सम्पूर्ण जीव जन्तुलाई जन्मायो, र सबैलाई आफ्नो अनुकम्पा प्रदान गऱ्यो । र सबैलाई किन उत्पन्न गरेकोछ त्यो पनि

आफ्नो पवित्र कुरआनमा वणर्न गरिहाल्यो । अल्लाहको भनाई छ :

अर्थ : मैले जिन्न र मानिसहरूलाई यस कारण मात्र सृष्टि गरेको छु ताकि उनीहरू मेरो उपासना गरुन् । (सूरतुज् जारियात ५६)

र अल्लाह उनीहरूको समस्याहरूलाई जान्दछ र यो पनि कि कुन वस्तु उनीहरूको लागि उत्तम छ । अर्थात त्यो पालनकर्ता उनीहरूको बारेमा उनी भन्दा धेरै ज्ञान राख्छ । जस्तो कि अल्लाहको वर्णन छ :

अर्थ : के उसले जान्ने छैन जसले सृष्टि गरेको छ ? जबकि ऊ सूक्ष्मदर्शी र हरेक कुराबाट अवगत पनि छ । (सूरतुल् मुल्क १४)

र त्यस अल्लाहलाई त्यो सबै कुराहरूबारे थाहा छ जुन उनीहरूको लोक परलोकको जीवनको लागि लाभदायक छन्, यसलेगर्दा सबै भन्दा राम्रो धर्म त्यही नै हो जसलाई अल्लाहले अविष्कार गरेका छन् । अल्लाहको भनाई छ :

अर्थ : र अल्लाहको रङ्ग भन्दा उत्तम रङ्ग कसको हुन सक्दछ ? (सूरतुल् बकर: १३८ )

र अल्लाहको रङ्ग इस्लाम धर्म हो, त्यो सबै परोक्ष अपरोक्ष क्रियाकलापको साथ जसको अल्लाहले आफ्नो भक्तहरूलाई निर्देशन दिएको छ । र यो स्पष्ट पारेको छ कि ती मानिसहरूको लागि यस धर्म भन्दा कुनै धर्म राम्रो छैन जुन चिन्तन मनन् गर्ने छन्, र जसलाई इस्लाम धर्मको सत्यता र वास्तविकता थाहा भइसकेको होस् ।

र अल्लहको अज्ञा र निर्देशनहरू जुन निर्देशनलाई अल्लाहले रचना गरेका छन् ती सबै उसको सृष्टिको लागि सर्वश्रेष्ठ छन् । अल्लाहको फर्मान छ :

अर्थ : के यिनीहरू फेरि अज्ञानताको युगका निर्णयहरू चाहन्छन् ?! ईमान ल्याएकाहरूका निम्ति अल्लाह बाहेक अरु कसको आदेश राम्रो हुनसक्दछ ? (सूरतुल् माइदः ५०)

यसै कारण अल्लाहले यो धर्म इस्लामलाई सधै बाँकी रहनेवाला शाश्वत धर्म बनाई दिएको छ, र कसैलाई यो अनुमति दिएन कि त्यो आफ्नो स्वार्थ र इच्छा अनुसार कुनै कार्य उसको विरुद्ध गरोस् । जस्तो कि अल्लहले आफ्नो अन्तिम सन्देष्टालाई यस्तो मार्गदर्शन गऱ्यो :

अर्थ : अनि हामीले तिमीलाई धर्मको खुला मार्गमा स्थापित गऱ्यौं, तसर्थ त्यसैको अनुशरण गर र अज्ञानीहरूका इच्छाहरूको पछि पछि नलाग्नु । यिनीहरू अल्लाहको सामु तिम्रो कुनै काम आउने छैनन्, अत्याचारीहरू एक अर्काका मित्र हुन्छन् र अल्लाह सदाचारीहरूको मित्र हो । (सूरतुल् जासियः १८,१९)

अल्लाहले आफ्नो सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई आदेश गर्नु भयो कि त्यस आदेशको पालना गर जसको आदेश दिइएको छ त्यसमा भलाई नीहित छ, र उहाँ र उहाँका अनुयायीहरूको त्यो नै लाभप्रद सिद्ध हुनेछ । र अल्लाहले उहाँलाई स्वार्थवान  र आआफ्नो इच्छाको अनुशरण गर्नेहरूबाट बाँच्ने चेतावनी दिएको छ, जुन मान्छेहरू आफ्नो अज्ञानताको कारण आफूलाई र आर्कोलाई पनि हानि पुऱ्याउँछन् ।

र नबी सल्लल्लाहो अलैहे वसल्लमलाई आफै धर्म बनाउनु अथवा यस धर्ममा थपघट गर्ने अधिकार छैन, उनको कर्तव्य केवल त्यो धर्मको प्रचार प्रसार गर्नु मात्र नै हो, र यो दुतत्व नै समस्त नबीहरूको सम्मान र श्रेष्ठताको लागि प्रयाप्त छ। र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम कुनै कुरा आफ्नो तर्फबाट गर्दैनन्, र कुनै निर्णय आफ्नो इच्छा अनुसार गर्दैनन् बरु त्यो सबै अल्लाहको तर्फबाट नै हुन्छ। जस्तो कि अल्लाहको फर्मान छ :

अर्थ : ताराको कसम, जब त्यो तल खस्छ। तिम्रो साथी (मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम) न त बाटो बिर्सेका छन् न भ्रमित छन्। र उनी आफ्नो इच्छाल केही भन्दैनन्। त्यो त मात्र वह्य हो जुन (उनीमाथि) पठाइँदै छ। (सूरतुन् नजम १,२,३,४)

अर्थात: मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम त्यही भन्छन् जुन आदेश गरिन्छ, र त्यसको प्रचार प्रसार गर्छन् बिना कुनै थपघट, आफ्नो अनुयायीहरूलाई त्यसैको आदेश दिन्छन् जुन उनीमाथि अल्लाहको तर्फबाट वह्य गरिन्छ।

र रसूल सल्लल्लाहो अलैहे वसल्लमको सुन्नत ( पद्धति ) त्यो हो जुन उनी आफ्ना अनुयायीहरू सित भनेका छन्, र यो सुन्नत पनि अल्लाहको तर्फबाट वह्य ( अल्लाहको प्रकाशना ) नै हो, जसलाई अल्लाहले उहाँमाथि अवतरित गरेका हुन् यद्यपि दुवैको परिभाषा भिन्न छ। सुन्नत त्यसलाई भन्छन् जसको शब्द त मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको हो तर अर्थ उहाँमाथि अल्लाहद्वारा वह्य गरिएको हो, अनि त्यसै अर्थलाई उहाँले आफ्नो शब्दमा वर्णन गर्नु भएछ। तर

कुरआनको शब्द र अर्थ दुवै अल्लाहकै तर्फबाट हो । अल्लाहको भनाई छ :

अर्थ : अल्लाह तिमीलाई ग्रन्थ र बुद्धिमता प्रदान गर्‍यो र तिमीलाई ती कुराहरूको ज्ञान दियो जुनकि तिमीलाई थाहा थिएन र तिमीमाथि अल्लाहको ठूलो कृपा छ । (सूरतुन् निसा ११३)

र रसूल सल्लल्लाहो अलैहे वसल्लमले यसको सत्यतालाई यसरी दर्शाउनु भएछ :

अर्थ : सावधान ! म माथि कुरआन अवतरित गरिएको छ, र त्यसको साथै त्यसै जस्तो आर्को पनि । ( अबू दाऊद किताबुस्सुन्नः )

यसबाट यो प्रष्ट र प्रमाणित हुन्छ कि सुन्नत पनि अल्लाहको तर्फबाट नै निर्देशित गरिएको छ । त जब धर्मको बारेमा यो दृष्टिकोण मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको लागि छ जब कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समस्त प्राणीहरूमा सर्वश्रेष्ठ र सर्वोच्च एवं पवित्र थिए । त अरु कसैलाई यो छूट कसरी दिन सकिन्छ कि उनी आफै धर्म बनाउन्, बरु अल्लाहले सबैलाई आफ्नो तर्फबाट कुनै प्रकारको थपघट गर्नुबाट चेतावनी दिनु भएको छ ।

र इस्लामीय निर्देशनहरूलाई अल्लाहले आफै अविष्कार गरेका हुनाले त्यसको भब्य र विशाल लाभहरू छन्, जसलेगर्दा इस्लाम धर्मको सर्वोच्चता सबैको समक्ष प्रकट भइहाल्छ ।

यस कारण यो धर्म समस्त सृष्टिहरूको पालनकर्ताको धर्म सिद्ध हुन्छ, र त्यसैको आधारमा सबैको निर्णय पनि

गरिन्छ । र त्यो स्रष्टा आफूले सृष्टि गरेका समस्त सृष्टिको बारेमा र उनीको अवश्यकताहरूको बारेमा अति ज्ञानवान छ । र यो धर्म अल्लाहबाट अवतरित गरिएको छ यसलेगर्दा मात्र त्यो स्रष्टा नै पूजा योग्य छ ।

जब यो धर्म अल्लाहको धर्म हो भन्ने कुरा सिद्ध भयो र यो पनि सिद्ध भयो कि यस धर्ममा कुनै कमी कम्जोरी छैन, र यो धर्म नै सबैभन्दा उत्तम धर्म हो । यदि यस धर्मलाई कुनै मनुष्यले अविष्कार गरेको हुन्थ्यो भने यसमा कमी कम्जोरी अवश्य पाइन्थ्यो र यसमा भिन्नता पनि पाइन्थ्यो जस्तो कि अल्लाहको फर्मान छ :

अर्थ : के यिनीहरू कुरआनमा चिन्तन मनन् गर्दैनन् ? यदि यो अल्लाह बाहेक अरु कसैको तर्फबाट भएको भए त्यसमा निःसन्देह धेरै विरोधाभाषपूर्ण कुराहरू पाउने थिए । ( सूरतुन् निसा ८२ )

र जब इस्लाम आफ्नो समस्त निर्देशनहरूलाई मात्र अल्लाहबाट अवतरित गरिएको ठान्छ भने सम्पूर्ण संसारलाई मनुष्यको पूजाबाट टाढा गरी केवल एक अल्लहको पूजातर्फ प्रवृत्त गर्छ । अनि जब प्रत्येक मनुष्य इस्लामी धर्म अनुसार पूर्णतः समान भइहाल्छ तब उनीहरू इस्लामीय निर्देशनहरू अनुसार आफ्नो जीवन व्यतीत गर्ने बाध्य भइहाल्छन्, यस ज्ञानको साथ कि यस धर्ममा कुनै बाँगोपना छैन जस्तो कि अरु धर्महरूमा देखिन्छ जसलाई मनुष्यहरूले आफ्नो इच्छानुसार अविष्कार गरेका छन् ।

र यस धर्म इस्लामको अधीनमा रही मनुष्य मनुष्यको वर्चस्वबाट मुक्त भइहाल्छ । र त्यस पालनकर्ताको तर्फ

दत्तचित्त रहन्छ जसले सबैलाई समानता प्रदान गरेको छ, फेरि सबै एकनास भइहाल्छन् र मात्र एक जन्मदाताको कृपा पाउनको निम्ति त्यसैतर्फ प्रवृत्त हुन्छन् ।

यस्तै यो धर्म इस्लाम अल्लाहको तर्फबाट हुनाले बिना कुनै संकोच अल्लाहको अज्ञाकारी हुनुलाई सरल गर्दछ, किनकि भक्तलाई यो थाहा हुन्छ कि जसले हामीलाई आदेश गरेछ त्यसैले नै जन्माएको पनि छ, र त्यही नै सम्पूर्ण जगतको स्वामी पनि हो र प्रचालक पनि । अनि यो कुरोको ज्ञानले भक्तको आस्था अति सुदृढ भइहाल्छ । अल्लाहको फर्मान छ :

अर्थ : यसर्थ तिम्रो रबको शपथ लिन्छु कि, यिनीहरू जबसम्म आफ्ना सम्पूर्ण विवादमा तपाईलाई इन्साफकर्ता स्वीकार गर्दैनन् र तपाईले गरेको निर्णय प्रति हृदयमा कुनै संकुचित विचार नराखी प्रसन्नतापूर्वक त्यसलाई अंगिकार गर्दैनन्, तबसम्म मोमिन हुन सक्दैनन् । ( सूरतुन् निसा ६५)

# इस्लाम सत्य धर्म

इस्लाम नै त्यो सत्य धर्म हो जसलाई अल्लाहले समस्त संसारको लागि मन पराएको छ । यस बाहेक अरु कुनै धर्म अल्लाहको होइन । अल्लाहको फर्मान छ :

अर्थ : निःसन्देह अल्लाहको नजिक इस्लाम नै (साँचो) धर्म हो र अह्ले किताबले ज्ञान प्राप्त गरिसकेपछि आपसी रिस-रागको कारण विरोध गरेका हुन् र जुन मानिसले अल्लाहका आयातहरूलाई मानेनन्, अल्लाहले उसको शीघ्र हिसाब लिने छ । ( सूरतु आले इम्रान १९ )

अल्लाहले यो शुभसन्देश दिए छन् कि इस्लाम बाहेक अरु कुनै धर्म उसको नजिक मान्य छैन, उसको नजिक इस्लाम धर्म नै मान्यता प्राप्त छ जुन मुहम्मद माथि अवतरित गरियो ।

र इस्लाम मुहम्मद सल्लल्लहो अलैहे वसल्लमको आगमन पश्चात त्यो सबै मार्गहरूलाई बन्द गरिदियो जुन बाटो अल्लाह सम्म पुगउनको लागि बनाइएका थिए । अर्थातः मुहम्मद सल्लल्लहो अलैहे वसल्लमको आगमन पश्चात जो कोहीले पनि उहाँको बाटो र धर्मलाई छाडी कुनै आर्को बाटो एवं धर्मको अनुशरण गरी अल्लाह सम्म पुग्ने प्रयास गर्नेछ त्यो हानि बिर्होनेवालाहरू मध्ये भइहाल्छ । अल्लाहको भनाई छ :

अर्थ : जुन मानिस इस्लाम बाहेक कुनै अन्य धर्मको खोजी गर्दछ भने उसको धर्म स्वीकार गरिने छैन र उसले

आखिरतमा घाटामा पर्ने मध्येको हुनेछ । ( सूरतु आले इम्रान ८५ )

अर्थात जस कसैले पनि आफ्नो इच्छानुसार अथवा इस्लाम बाहेक कुनै आर्को धर्मको पद्धति बमोजिम अल्लाहको उपासना गर्छ भने त्यो अल्लाह समीप मान्य हुँदैन, किनकि इस्लाम बाहेक सबै धर्महरू मिथ्या र निराधार छन् ।

र इस्लाम धर्म नै सत्य एवं साँचो धर्म हो जसलाई अल्लाहले हामी सबैको लागि मनपराएका छन्, र हाम्रो उपासना अराधना त्यसै इस्लामका निर्देशनहरू बमोजिम नै स्वीकार्य हुनेछ । अल्लाहको फर्मान छ :

अर्थ : आज हामीले तिम्रो निम्ति तिम्रो धर्मलाई पूर्ण गरिसकेका छौं र तिम्रो लागि आफ्ना कृपाहरू पूरा गरिसकेका छौं र तिम्रो लागि इस्लाम धर्म रोज्यौ । (सूरतुल् माइदः ३)

अर्थात : अल्लाहको स्वीकृति इस्लाम धर्मलाई प्राप्त छ त्यस बाहेक अरु कुनै धर्म मुहम्मद सल्लल्लहो अलैहे वसल्लमको आगमन वश्चात स्वीकार्य छैन ।

वास्तवमा वास्तविक सत्य धर्म इस्लाम नै हो, जसलाई कुरआन, हदीस, र समस्त सन्देष्टाहरूले प्रमाणित गरिसकेका छन् । र मुहम्मद सल्लल्लहो अलैहे वसल्लमको आगमनबारे भविष्यवाणी गरिसकेका छन् । र आआफ्ना समुदाय र अनुयायीहरूलाई यो शुभ समाचार सुनाइसकेका छन् । हजरत ईसा अलैहिस्सलामको बारेमा वर्णन गर्दै अल्लाहको कथन छ :

अर्थ : र जब मरियमको छोरा ईसा(अलैहिस्सलाम)ले भनेः कि हे मेरो क़ौम । बनी इस्राईल ! म तिमी सबैको लागि अल्लाहबाट पठाइएको रसूल हूँ । म भन्दा पहिलेको किताब

तौरातको म प्रमाणित गर्नेवाला छु र म पछि आउने एउटा संदेष्टा जसको नाम अहमद हुनेछ, उनको शुभागमनको शुभ-सन्देश सुनाउँछु । अनि जब उनी तिनीहरूको पासमा स्पष्ट निशानीहरू लिएर आए, तब तिनीहरूले भन्न थाले कि यो त स्पष्ट जादू हो । ( सूरतुस्सफ ६ )

फेरि ईसा अलैहिस्सलाम जस्तो कि इन्जीलमा उल्लेख छ कि इस्राईलको संततितर्फ आव्हानकर्ता बनेर आए, र सबैलाई एक अल्लाहको पूजा गर्नुको संदेश र अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको निकट भविष्यमा आगमनबारे शुभ सन्देश सुनाए । र इन्जील जस्तै मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आगमनबारे भविष्यवाणी तौरातमा पनि मिल्छ जस्तो कि यहूदीहरू आफ्नो ग्रन्थ तौरातको माध्यमबाट मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई आफ्ना सन्तान जस्तै चिन्दछन् । अल्लाहको फर्मान छ :

अर्थ : जुन मानिसहरूले यस्ता रसूल, नबी उम्मी ( निरक्षर) को अनुशरण गर्छन्, जसलाई उनीहरूले आफुकहाँ तौरात र इन्जीलमा लेखिएको पाउँछन् । उनले उनीहरूलाई असल कुराको आदेश गर्दछन् र नराम्रा कुराहरूबाट मनाही गर्दछन् र स्वच्छ कुरालाई हलाल (स्वीकार्य) बताउँछन् र अपवित्र कुरालाई हराम (वर्जित) बताउँछन् र तिनीहीरु माथिबाट त्यो बोझ उतार्दछन् जुन अहिलेसम्म उनीहरूमाथि लादिएका थिए बन्धनहरूलाई फुक्का गर्दछन् जसमा उनीहरू जकडिएका थिए । अत : जो मानिसहरू त्यस नबीमा विश्वास गर्दछन् र उनको समर्थन गर्दछन् र उनको सहायता गर्दछन्, र त्यस प्रकाशलाई मान्दछन् जो उनको साथमा पठाइएको

छ । यस्ता मानिसहरू पूर्ण सफलता प्राप्त गर्नेवाला छन् । ( सूरतुल् अअ्राफ १५७ )

बरु मुहम्मद सल्लल्लहो अलैहे वसल्लम भन्दा अघिका सबै सन्देष्टाहरूको अनुयायीहरू सित अल्लाहले यो वाचा ( कबोल ) लिएको थियो कि जब मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई पठाइन्छ तब सबै उहाँमाथि ईमान ल्याउने छन् र उहाँमाथि विश्वास गर्ने छन् । अल्लाहको फर्मान छ :

अर्थ : जब अल्लाहले पैगम्बरहरूसँग वाचा गरायो कि जे जति मैल तिमीलाई किताब र ज्ञान प्रदान गर्दछु, अनि तिम्रो नजिकमा कुनै पैगम्बर आउँछ जसले तिम्रो किताबको पुष्टि गर्दछ त तिमीले अवश्य नै त्यसमाथि विश्वास गर्नुपर्दछ र उसको मद्दत गर्नुपर्ने छ । (वाचा लिएपछि) सोध्यो, के तिमीले वचन दियौ र यस वचन बद्धतामा मलाई संरक्षणको रूपमा ठहरायौ ?। तिनीहरूले भने (हो) हामीले वाचा गऱ्यौं । (अल्लाहले) भन्यो तिमीहरू साक्षी भइराख र म पनि तिम्रो साथमा साक्षी रहने छु । ( सूरतु आले इम्रान ८१ )

अनि जब यो सिद्ध भयो कि इस्लाम नै साँचो धर्म हो तत पश्चात अरु सबै धर्महरू निराधार छन् । यसै कारण इस्लाम धर्म अरु सबै धर्म जुन इस्लाम भन्दा पहिला थिए स्थगित गरिदियो र अल्लाहले ती सबै धर्मको सट्टामा इस्लामलाई उत्कृष्टता प्रदान गरी सबै धर्ममाथि यस धर्मको वर्चस्वता कायम गऱ्यो । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : उसैले आफ्नो रसूललाई मार्गदर्शन र सत्य धर्म सहित पठाएको छ ताकि यसलाई अरु अन्य धर्महरूमाथि

अधिपत्य प्रदान गरोस् । यद्यपि मुशिरकहरूलाई नराम्रो लागोस् । ( सूरतुत्तौबः ३३ )

र आर्को ठाउँमा अल्लाहको फर्मान छ :

अर्थ : उही हो जसले आफ्नो रसूललाई मार्गदर्शन र सत्य धर्मको साथ पठायो, ताकि उसलाई तमाम धर्महरू माथि अधिपत्य प्रदान गरोस् र साक्षीको हैसियतले अल्लाह पर्याप्त छ । ( सूरतुल् फतह २८ )

र अल्लाहले यो आदेश गऱ्यो कि इस्लाम नै उसको सत्यधर्म हो र त्यस बाहेक सबै पथविचलन नै हो, जुन व्यक्ति इस्लामलाई छाडी आर्को कुनै धर्मको अनुशरण गर्छ भने त्यो पथविचलित भई लोक र परलोकको लाभबाट बञ्चित भइहाल्छ । अल्लाहको कथन छ :

अर्थ : र आदेश यो छ कि यो धर्म मेरो सोझो बाटो हो, तिमी यसैमा हिंड्नु र अन्य मार्गमा न हिंड्नु किन भने त्यसमा हिंडे अल्लाहको मार्गबाट बिचलित भैहाल्नेछौं । यसको विशेष आदेश तिमीलाई अल्लाहले दिएको छ जसबाट तिमी आत्म संयमी बन्नसक । ( सूरतुल् अनआम १५३ )

र आर्को ठाउँमा अल्लाहको फर्मान छ :

अर्थ : अनि उनको पालनकर्ताले उनलाई रोज्यो, र उनको प्रायश्चित स्वीकार गऱ्यो र उनको मार्गदर्शन गऱ्यो । आदेश भयो तिमी दुवै यहाँबाट तल झर । तिमी आपसमा एक अर्काको शत्रु हौ । अब जहिले पनि मेरो तर्फबाट मार्गदर्शन जाने छ तब जसले मेरो मार्गदर्शनको अनुपालन गर्दछ । ऊ नत पथभ्रष्ट हुनेछ र न कष्टमा पर्नेछ । र जसले मेरो स्मृतिबाट बिमुख हुनेछ त्यसको जीवन कष्टमय हुनेछ र

कियामतको दिन त्यसलाई हामीले अन्धा बनाएर उठाउने छौं । ( सूरतु ताहा १२२, १२३,१२४ )

अल्लाहको कृपा र दयाको पात्र उही व्यक्तिहरू हुन्छन् जुन इस्लाममाथि सुदृढ भई अल्लाहको उपासना गर्दछन्, र जसले इस्लामलाई छाडी कुनै आर्को धर्मको अनुशरण गर्ने छन् ती दुवै लोकमा घाटा बिहोर्नेवाला भइहाल्छन् । र जसले इस्लामलाई दुढतापूर्वक समात्यो त्यसको लागि अल्लाहले सुख शान्ति दुवै लोकमा आरक्षित गरिदिएका छन् । अल्लाहको फर्मान छ :

अर्थ : जसले आस्था गर्दछन् र आफ्नो ईमानसँग शिर्कका कुराहरू मिसाउँदैनन्, त्यस्ताहरूको निम्ति सुरक्षा छ र तिनैले मार्गदर्शन प्राप्त गर्दछन् । ( सूरतुल् अनआम ८२ )

इस्लाम धर्मको अनुशरण गर्नेहरूलाई अल्लाह दृढता प्रदान गर्छ जुन मुटुको शान्ति एवं प्रत्येक सुखको जग हो, र प्रत्येक पीडा र चिन्ताबाट मुक्ति पनि । अल्लाहको फर्मान छ :

अर्थ : ईमानवालाहरूलाई अल्लाह सत्य निष्ठाको साथमा सवल राख्दछ दुनियाको जीवनमा पनि र मृत्युपछिको जिन्दगीमा पनि, होः अन्यायीहरूलाई अल्लाहले भ्रमित गरिदिन्छ र अल्लाह जो चाहन्छ, गरिहाल्छ । ( सूरतु इब्राहीम २७ )

अल्लाहले सत्मार्ग र वास्तविक सफलता र मुक्ति दुवै लोकमा इस्लामका अनुयायीहरूको लागि सृजना गरेको छ । अल्लाहको फर्मान छ :

अर्थ : यदि तिनीहरू पनि तिमी जस्तै आस्था राखे भने सही मार्ग पाउने छन् । ( सूरतुल् बकरः १३७ )

र आर्को ठाउँमा अल्लाहको वर्णन छ :

अर्थ : (हे पैगम्बर !) तै पनि यदि यी मानिसहरू तपाईसँग वादविवाद गर्दछन् भने भनिदिनुस् म र मेरा अनुयायीहरूले सम्पूर्ण रूपमा अल्लाहमा समर्पित भइसकेका छौं र किताबवाला र अनपढहरू सित भनि दिनुस् कि के तिमीहरूले पनि इस्लाम मान्दछौ ? यदि यिनीहरू पनि अनुयायी बन्दछन् भने निःसन्देह मार्गदर्शन प्राप्त गर्नेछन्, र यदि मान्दैनन् भने तपाईको काम मात्र अल्लाहको सन्देश पुऱ्याइदिने हो । अल्लाह (आफ्ना) भक्तहरूलाई राम्री देखी राखेको छ । ( सूरतु आले इम्रान २० )

र रसूल सल्लल्लाहो अलैहे वसल्लमले खबर दिनु भएको छ कि स्वर्गमा मात्र उही व्यक्ति प्रवेश पाउनेछ जसले इस्लाम धर्मको अनुशरण गर्नेछ, उहाँको कथन छ : " त्यसको शपथ जसको हातमा मेरो ज्यान छ, यस उम्मतको कुनै व्यक्ति चाहे त्यो उहूदी होस् वा ईसाई होस् यदि त्यसलाई मेरो बारेमा ज्ञान भयो, अनि त्यो मँ माथि ईमान ल्याएन र यसै अवस्थामा त्यसको मृत्यु भयो भने त्यो नर्कमा अवश्य जानेछ" । किनकि इस्लाम धर्म नै सत्य धर्म हो, र यस बाहेक अरु कुनै धर्म मान्य छैन, र अल्लाहले यस धर्मलाई नबूवत र दूतत्वद्वारा पूर्ण गरि अरु समस्त धर्महरूलाई निलम्बित गरिदिएका छन्, र साथै यो भविष्यवाणी पनि गरियो कि इस्लाम नै प्रलय सम्म बाँकी रहनेवाला धर्म हो । र ईसा अलैहिस्सलाम भविष्य कालमा एक चोटि फेरि आउने छन् तर ईसाई धर्म लिएर आउँदैनन् बरु मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले ल्याएको धर्म इस्लामको अनुशरण गर्ने छन् र मुहम्मद सल्लल्लाहो

अलैहे वसल्लमको अनुयायीहरू मध्येका हुने छन् । मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : " र शपथ छ त्यस विधाताको जसको हातमा मेरो ज्यान छ निकट भविष्यमा ईसा बिन मरियम आउने छन् सत्यको निर्णायकको रूपमा, सलीबलाई टुक्रा टुक्रा पार्ने छन्, र सुँगुरको बधगर्ने छन्, र करलाई समाप्त गर्ने छन्, र धन सम्पत्ति यति अधिक भइहाल्ने छ कि कुनै पनि व्यक्ति त्यसलाई स्वीकार गर्दैन । यहाँ सम्म कि एउटा सज्दा (ढोग) सम्पूर्ण संसार र त्यसमा जे जति छन् ती सबैभन्दा अधिक लाभप्रद सिद्ध हुनेछ । फेरि यस हदीसलाई वर्णन गर्ने सहाबी हजरत अबू हुरैरह भन्छन्: कि यदि तिमी चाहन्छौ भने अल्लाहको यो कथन पढ ! अर्थ : " र अहले किताब मध्ये कोही बाँकी रहने छैन जसले हजरत ईसा( अलैहिस्सलाम)को मुत्यु भन्दा अगाडि नै उनीमाथि विश्वास नगरोस् र कियामतका दिन उनी तिनीहरू विरुद्ध साक्षी हुने छन् ।" ( बुखारी )

र दोस्रो हदीसमा छ कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " मेरो उम्मतको एक समूह निरंतर हकको लागि युद्ध गर्दै रहनेछ र यस समूहको वर्चस्व प्रलय सम्म कायम नै रहनेछ, अनि ईसा अलैहस्सिलाम आकाशबाट झरछन्, अनि उनीहरूको अमीर ( सरदार,मुखिया,नायक ) ले भन्नेछ आउनुस् हामीलाई नमाज पढाउनुस्, अनि ईसा अलैहिस्सलाम भन्छन्: हाइन बरु यस समय तिमी नै अमीर हौ अल्लाहले यो प्रतिष्ठा र सम्मान मात्र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीलाई प्रदान गरेको छ" । ( मुस्लिम )

# इस्लाम स्पष्ट धर्म

जब इस्लाम ईश्वरीय धर्म हो, र अल्लाह द्वारा अवतरित धर्म हो, र सत्य र स्वाभाविक एवं बुद्धिमत्ताको धर्म हो भने त्यसको मुख्य विशेषताहरू मध्ये स्पष्टता र सरलता पनि हो जुन तेरुन्तै समभ्कमा आइहाल्छ । प्रत्येक व्यक्ति त्यसका निर्देशनहरूलाई बुभ्क्न सक्छ, र त्यसै बमोजिम कर्म गर्न सक्छ । यस धर्मका सबै निर्देशनहरू प्रष्ट छन् त्यसमा कुनै बाँङ्गोपना छैन, किनकि यसको जग कुरआन र हदीस हुन् ।

अल्लाहले समस्त मानवजातिलाई सम्बोधित गर्दै आदेश गर्नु भएछ कि उनी कुरआनमा चिन्तन् मनन् गरुन् । जस्तो कि सबैलाई उत्साहित गर्दै अल्लाहले भनेका छन् :

अर्थ : त के उनीहरूले कुरआनमा सोचविचार गर्दैनन्, वा उनीहरूको हृदयमा ताल्चा लागेका छन् । (सूरतु मुहम्मद २४)

र अल्लाहले सबैलाई कुरआन भित्र चिन्तन् मनन् गर्ने आदेश दिएका छन् एवं त्यसको अर्थलाई बुभ्क्ने आज्ञा दिएका छन्, किनकि कुरआनको अर्थ स्पष्ट छ सबैको समभ्कमा आउँनेवाला छ । र यो कदापि हुनसक्दैन कि अल्लाह हामीलाई यस्तो कार्य गर्नुको आदेश गरुन् जुन हुनसक्दैन । यसबाट यो प्रष्ट र प्रमाणित हुन्छ कि कुरआन सबैको लागि सरल र समान एवं ज्ञानवर्धक छ ।

र कुरआनको सरलता मात्र मुस्लिम समुदायको लागि छैन बरु सर्वजगतको लागि छ, प्रत्येक प्राणी त्यसको अर्थ

बुझ्री ज्ञान प्राप्त गर्न सक्छ। र अल्लाह आफ्नो पवित्र ग्रन्थ कुरआनको विशेषता बताउनु भएछ कि त्यो प्रष्ट र स्पष्ट छ। अल्लाहको भनाई छ :

अर्थ : अलिफ-लाम-रा, यो स्पष्ट ग्रन्थका आयतहरू हुन्। ( सूरतु यूसुफ १ )

यो कुरआनको विशेषता नै हो जुन स्पष्ट ग्रन्थ कुरआनको उत्कृष्टता परमाणित गर्छ र त्यसको प्रष्ट आयतहरू ( श्लोकहरू ) अल्लाहको कृपा दया र जे जति अल्लाह चाहन्छ प्रमाणित गर्छन्। र श्लोकको प्रष्टताले गर्दा कसैलाई कुनै प्रकारको भ्रम र संदेह पनि हुँदैन ती सबै कुराहरूबारे जसलाई यी आयतहरू दर्शाउँछन्। र रसूल सल्लल्लाहो अलैहे वसल्लम यिनै आयतहरूको माध्यमले सबैलाई डराउँथे, र सबैलाई सुमार्गमा लगाउँथे यसैलेगर्दा अल्लाहका भक्तहरू अल्लाहको सत्मार्गमा अग्रसर रहन्थे।

अल्लाहको वाणी र रसूल सल्लल्लाहो अलैहे वसल्लमको वाणी स्पष्ट छन्, यसको प्रमाण कुरआनमा यस प्रकार वर्णन छ :

अर्थ : र अब हामीले तपाईलाई पनि यो किताब प्रदान गरेका छौं, जसबाट मानिसहरूलाई जे प्रदान गरेका छौं तपाईले स्पष्ट गरि वर्णन गर्नुस्, सम्भव छ तिनीहरूले विचार गरुन्। ( सूरतुन् नहल ४४ )

र अल्लाहले यस इस्लामलाई **सोझोमार्ग**को नामबाट नामाकरण (नामाङ्कित) गरेका छन् जस्तो कि अल्लाहको वर्णन छ :

अर्थ : हामीलाई सोझो (सच्चा) बाटो देखाऊ । ( सूरतुल् फातिहा ६ )

र सोझो मार्ग त्यो बाटो हो जुन सोझो र स्पष्ट होस् त्यसमा कुनै प्रकारको बाँङ्गोपना नहोस् । कुरआनको यस आयतमा यो विशेषतालाई नै दर्शाइएको छ ।

र इस्लामको सबैभन्दा उत्कृष्ट विशेषता मध्ये यो हो कि इस्लामले यस्ता शब्दहरूको अथवा निर्देशनहरूको माध्यमबाट सम्बोधन गरेन जुन हाम्रो मस्तिष्कमा आँउदैन र कोही बुझ्न सक्दैन । बरु इस्लामिक विद्वानहरूको एकमत छ कि कुरआन र हदीसका निर्देशनहरू यस्ता छैनन् कि कसैको समझमा न आओस् अथवा केही मानिसको समझमा आओस् र कतिपयलाई समझ न आओस् बरु कुरआन र हदीस हरेक मनुष्यको समझमा आउँछ चाहे त्यो विद्वान होस् वा साधारण व्यक्ति ।

र इस्लामको स्पष्टताको विशेष उदाहरण त्यसका आस्थाबारे स्पष्ट निर्देशनहरू हुन् जसमाथि इस्लामको जग निर्भर छ, र जसमा कुनै लोच र बाँङ्गोपना छैन । आस्थावानहरू त्यसलाई बुझेर मात्र त्यसमा आस्था राख्छन् यस पश्चात कि उनको हृदयले त्यसको हरेक निर्देशनलाई मनपराई स्वीकार गरोस् ।

यसको तुलनामा हामी अरु धेरै धर्महरूलाई हेर्दछौं कि त्यसमा त्यस धर्मका निर्देशनहरूमा तालमेल हुँदैन र एउटा निर्देशन आर्को निर्देशन विपरीत र विरुद्ध हुन्छ । र त्यसका निर्देशनहरूमा यति जटिलता हुन्छ कि मानछे त्यसबाट कुनै निष्कर्ष निकाल्न सक्दैन । र कतिपय समस्या र प्रश्नको

समाधान त्यस धर्मका निर्देशनहरूमा मिल्दैन । यसै कारण यी धर्महरूका विद्वानहरू त्यस धर्मका अनुयायीहरूलाई धर्मनिर्देश न पढने आग्रह गर्छन् र भन्छन् कि यो निर्देशनहरू तिमीहरूको समझमा आउँदैन यो तिमीहरूको विवेक भन्दा बाहिरको कुरा हो, तिमीहरूको चेतनाको क्षमता यति छैन कि यसलाई चेतन सक । यसको विपरीत इस्लाम धर्म सबैको समझमा आउँछ र सबै माथि यो अनिवार्य छ कि जति पनि त्यसलाई ज्ञान छ त्यसको प्रचार प्रसार पनि गरोस् ।

र उदाहरण स्वरूप हेर्नुस् ! जब हामी ईसाई धर्मको अध्यन गर्छौं त हेर्दछौं कि त्यसका निर्देशनहरू रहस्यमय ढङ्गले एक आर्कासित गुडमुड भई विरोधाभाषी अर्थ दर्शाउछन् । र त्यसमा यस्तो फल्सफी कुराहरू छन् जसलाई बुद्धिले स्वीकार गर्दैन र त्यसका निर्देशनहरू त्यसको सिद्धान्तलाई दर्शाउन असमर्थ छन् । यसैलेगर्दा कानीसहरूमा ( ईसाईहरूको पूजा घर ) रहस्यमय कुराहरू छन् जसलाई उनीहरूका ठुलठूला विद्वानहरू पनि बुझन सक्दैनन्, साधारण मान्छेको के आँट कि त्यसलाई बुझ्न सकोस् ।

र यसैलेगर्दा यी धर्महरूमा ज्योतिषी र धर्मगुरुहरू त्यस धर्मका अनुयायीहरू माथि आफ्नो पूर्ण वर्चस्व जनाउँछन्, यसै कारण यी धर्महरूका अनुयायीहरू यी धर्महरूलाई छाडी आर्को धर्ममा प्रवेश गर्छन् । र यस धर्म परिवर्तनको मुख्य कारण मध्ये त्यस धर्मको निर्देशनहरू स्पष्टरूपले प्रष्ट नभएको पनि हो । तर इस्लाम धर्ममा प्रत्येक प्रश्नको उत्तर छ, र प्रत्येक समस्याको समाधान पनि छ, यसै कारण

इस्लाममा आस्था राख्नेहरूलाई केही संदेह हुँदैन र उनीहरू इस्लामको प्रत्येक निर्देशनबाट सन्तुष्ट हुन्छन् ।

र यसै कारण हामी हेर्दछौं कि त्यो मुसलमान जसलाई यस इस्लामको हरेक निर्देशन र कुराहरू थाहा छ र ऊ यस धर्मबाट संतुष्ट छ त्यो कदापि यस भर्मबाट विमुख हुँदैन ।

र यसै सन्दर्भमा अबू सुफियानको राजा हेरक्लको साथ एउटा वृतान्त वर्णन छ जुन मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आगमन पश्चात घटेको थियो । र यो घटना अबू सुफियानको इस्लाम ल्याउनु भन्दा पहिलाको वृतान्त हो । कुरो यो थियो कि अबू सुफियान रोमको इलिया नामक स्थानमा थिए अनि त्यसै समय हेरक्ल राजाले अबू सुफियान र उनका साथीहरूलाई आफ्ना दूतहरू द्वारा डाँकेर बोलाए, अनि आफ्नो बस्ने कक्षमा बोलाएर भाने: तिमी मध्ये कुन मान्छे त्यस व्यक्तिको निकट्तम् आफन्ती मध्येको हो जुन व्यक्ति आफूलाई सन्देष्टा भन्छ । त अबू सुफियानले भने: म त्यसको किट्तम् आफन्ती हूँ । अनि राजाले भन्यो: यस मान्छेलाई म सित नजिक बसाला, र त्यसका साथीहरूलाई त्यसको पिठ्यू पछाडी बसालिदेऊ । अनि आफ्नो अनुवादक सित भन्यो कि यसको साथीहरूलाई भनिदेऊ कि यदि यस मान्छेले हाम्रो प्रश्नहरूको उत्तर गलत दिन्छ भने उनीहरू पछाडीबाटै त्यसको संकेत गरुन् । अनि हेरक्लले प्रश्न आरम्भ गर्‍यो र ती प्रश्नहरू मध्ये यो प्रश्न पनि थियो ! हेरक्लले भन्यो: के त्यस सन्देष्टाले ल्याएको धर्मलाई स्वीकारे पश्चात केही मान्छे त्यसबाट विमुख पनि हुन्छन् ? अबू सुफियानले उत्तर दिए कि यस्तो कदापि हुँदैन । अनि हेरक्लले भने: मैले

तिमीसित प्रश्न गरें कि के कुनै मान्छे त्यस धर्मलाई स्वीकारे पश्चात त्यसबाट विमुख हुन्छ त तिमीले भन्यो कि होइन यस्तो त अहिले सम्म भएको छैन । हो, जब ईमानको मिठास हृदयमा बस्छ तब यस्तै हुन्छ । ( पूर्ण हदीस बुखारी, मुस्लिममा हेर्नुस् )

# इस्लाम प्राकृतिक धर्म

ईश्वरीय विशेषता त्यो फितरत (प्रकृति) हो जसलाई अल्लाह मानवहरूको हृदयमा जागृत गरिदिन्छ, जस्तो कि सुकर्म सुव्यवहार आदि, जसबाट अल्लाह प्रसन्न हुन्छ र त्यसै कारणले मनुष्यलाई सबै प्राणीमाथि सर्वोच्चता प्रदान गरेछ ।

र यस ईश्वरीय फितरतको कारणले नै मानिसको आत्मा केवल एक अल्लाहलाई पूज्नु र एकेश्वरवादमा आस्था राख्नुको इच्छुक हुन्छ, र सबै कुकर्म छाडी सत्कर्म गरेर आफ्नो ईश्वरको दया पाउने आशा लिई आफ्नो जीवन व्यतीत गर्छ ।

र फितरत ( प्रकृति )को अर्थ हो : बाँङ्गोपनाबाट ( कुकर्मबाट) सत्कर्मतर्फ प्रवृत्त हुनु, र निराधारताबाट हक र आधारभूत तर्फ प्रवृत्त हुनु, र कुमार्गबाट सुमार्गतर्फ प्रवृत्त हुनु । यही दुई रहस्यमय कारणले अल्लाहले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई आफ्नो निर्देशन सहीत पठायो । किनकि सत्य असत्यको बीच नै मनुष्य शैतानको माध्यमले भौतरिन्छ । अन्ततः अल्लहले आफ्नो अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई सदैव बाँकी रहने निर्देशन र सत्यको विजय र असत्यलाई प्राजय गराउने निर्देशनहरू दिएर पठायो । यसै कारण इस्लामी निर्देशनहरू सोझो फितरतको अनुकूल अर्थात प्राकृतिको अनुकूल छन् प्राकृति र इस्लामीय निर्देशनहरूमा कुनै विवाद हुँदैन ।

र जब मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई इस्रा र मेअ्राज गराईयो जस विशाल घट्नालाई आफै रसूल सल्लल्लाहो अलैहे वसल्लम वर्णन गर्नुहुन्छ कि “ जब म बैतुल् मुकद्दस सम्म पुगें त जिब्रीलले बुराक नामक सवारीलाई त्यस हल्कासित बाँधे जसमा नबीहरू अआफ्ना सवारीलाई बाँध्थे, अनि भन्नु हुन्छ कि फेरि म मस्जिदमा प्रवेश गरें र दुई रकअत नमाज पढें र बाहिर निस्कें । अनि जिब्रील अलैहिस्सलाम आउनु भयो यस अवस्थामा कि उहाँको हातमा दुई प्याला (भाँडा) थियो, एउटा प्यालामा दूध र आर्कोमा मदिरा थियो त मैले दूध सेवनलाई मनपराऐं, त जिब्रीलले भन्नु भयोः तपाईले फितरतलाई मनपराउनु भयो,.... । ” ( मुस्लिम किताबुल् ईमान )

राम्रो फितरत र नराम्रो फितरतको यो अति प्रष्ट उदाहरण हो, दूध लाभदायक हुन्छ यसै कारण इस्लाम धर्ममा हलाल (वैध) छ र मदिरा हानिकारक हुन्छ यसै कारण त्यो हराम (अवैध) छ । र यसै कारणले रसूल सल्लल्लाहो अलैहे वसल्लमले हानिकारकलाई छाडी लाभदायक वस्तुलाई रोज्नु भयो । त रसूल सल्लल्लाहो अलैहे वसल्लमको यो रोजाई प्रमाणित गर्छ कि उहाँले ल्याएको धर्म नै सबै भन्दा राम्रो धर्म र सबै भन्दा कल्याणकारी धर्म हो । र यसको वर्णन अल्लाहले आफ्नो पवित्र ग्रन्थ कुरआनमा यसरी गर्नु भएछः

अर्थ : तसर्थ तपाईं दत्तचित्त भएर आफूलाई दीन ( इस्लाम) तर्फ लगाउँदै गर्नुस् । अल्लाहको त्यो विशेषता जसमाथि उसले मानिसहरूको सृष्टि गरेको छ । अल्लाहले बनाएको (लाई) नबदल्नु । यही सोझो धर्म हो । तर धेरैले

बुझ्दैनन् । (मानिसहरू हो !) अल्लाह तर्फ लागेर ऊ सित डर मान्ने गर र नमाज पढ्ने गर र मुश्रिकहरू मध्येबाट नबन्नु । उनीहरू मध्येबाट जसले आफ्नो धर्मलाई टुक्रा-टुक्रा गरिदिए र स्वयम् पनि समूह-समूह (मा विभाजित) भए, प्रत्येक समूह आफूसंग भएको चीज वस्तुमा प्रसन्न छ । ( सूरतुर्रूम ३०-३२ )

अल्लाहले यी उल्लेखित श्लोकहरूमा आफ्नो रसूललाई आफ्नो त्यस फितरततर्फ प्रवृत्त हुने आदेश गरेको छ जुन फितरतमा अल्लाहले सबैलाई जन्माएको छ, र सबैको मस्तिष्कमा त्यस फितरतको मोहमाया र त्यसको विपरीत वस्तुको घृणा राखिदिएको छ ।

निःसंदेह इस्लामका परोक्ष र अपरोक्ष निर्देशनहरू तर्फ मनुष्य प्रवृत्त हुन्छ किनकि सबैको हृदयमा सत्यता प्रति माया राखिएको छ र यो नै फितरतको वास्तविकता र कसौटी हो । र रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भएको छ कि प्रत्येक मनुष्य यसै अल्लाहको फितरतमाथि जन्मदेखि नै अग्रसर हुन्छ यहाँ सम्म कि संसारिक लोभ लाल्सा उसलाई परिवर्तित गरिहाल्छ, रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छः

अर्थ : प्रत्येक शिशु अल्लाहको फितरतमा जन्मन्छ अनि उसको आमा बुवा उसलाई यहूदी अथवा ईसाई वा मजूसी बनाई दिन्छन् । ( बुखारी किताबुल् जनाइज )

विचार गर ! कसरी यहूदी र ईसाई धर्म यस फितरत विरुद्ध भइहाले धर्ममा परिवर्तन भएको कारणले । किनकि प्रत्येक शिशुजाति फितरतमा जन्मिन्छ, अनि त्यसको बुवा

आमा त्यसलाई आफ्नो धर्मको रङ्गमा रङ्गिहाल्छन् । तर सावधान भइहाल्नुस् किनकि इस्लामबाट विमुख हुनुको अर्थ प्राकृति र अल्लाहको सृष्टिमा परिवर्तन गर्नु सरह हो । त जब इस्लाम धर्म प्राकृतिक धर्म सिद्ध भयो त अब यो पनि हेर्नुस् कि इस्लामका प्रत्येक निर्देशनहरू पनि त्यस प्राकृति अनुकूल नै छन् र दुवैमा केही भिन्नता र असमानता छैन, बरु इस्लामी निर्देशनहरू त्यस फितरतलाई अझै बलियो र पूर्ण बनाउँछन् । उदाहरण स्वरूप हेर्नुहोस् ! अल्लाहले एकेश्वरवादको आदेश दिएका छन् र बहुदेववादबाट रोकेका छन् र यही नै वास्तविक फितरत ( प्रकृति) हो, किनकि मनुष्यको फितरत पूजा त्यसैको गर्न चाहन्छ जुन त्यस पूजा योग्य होस्, र त्यो निःसंदेह अल्लह नै हो ।

र यस्तै दुई पूजनीय पनि हुन सक्दैन अथवा त्यो भन्दा अधिक पनि हुन सक्दैन किनकि मान्छे कस कसको पूजा गर्छ, र कस कसलाई ढोग गर्न सक्छ । र यस्तै मनुष्यको शुद्ध फितरत यो पनि सहन गर्न सक्दैन कि आफू जस्तो कुनै मनुष्यलाई पूजोस् जुन त्यसलाई लाभ र हानि पुर्‍याउन सक्दैन, र ढुङ्गा, माटो, र रुख पंक्षीको त कुरै नगर्नुस् । बरु सोझो फितरत चाहन्छ कि आफ्नो पालनकर्ताको पूजा गरूँ । जसरी नमाज पढी, वर्त बसी, परिक्रमा गरी, असहाय भोकाएको मान्छेलाई भोजन गराई अल्लाहको प्रसन्नता खोजोस् । यो सबै इस्लाम र फितरत अनुकूल कार्यहरू हुन् । र सोझो फितरत अनुकूल त्यो सबै कार्यहरू पनि हुन् जसतर्फ इस्लाम आव्हान गर्छ, जसरी कसैमाथि परोपकार गर्नु, कसैलाई खुशी दिनु, आफ्ना आफन्तीहरू सित प्रेम गर्नु,

स्नेह राख्नु, आफ्ना छिमेकीहरू सित सम्मानपूर्वक व्यवहार गर्नु, लाभदायक वस्तुको सेवन गर्नु, हानिकारक वस्तुबाट टाढा रह्नु, राम्रो लुगा लगाउनु, सिङ्गार गर्नु, तर अभिमान नगर्नु, कसैमाथि अन्याय अत्याचार नगर्नु, कसैको अधिकार हनन् नगर्नु, सत्यको साथ दिनु, र सत्यवान बन्नु, सबैलाई सत्यताको मार्गतर्फ आव्हान गर्नु ..... आदि ।

र इस्लाम धर्म नै प्राकृतिक धर्म हो यसको प्रमाण हो स्वयम् स्रष्टाको निसाफ र सृष्टिमाथि उसको उदार अनुग्रह र दया, र उसको आदेशमा सम्पूर्ण मानवजातिको प्रतिबद्धता कि उनी उसको सीमाको उल्लंघनकारी बन्ने छैनन् र त्यसले बनाएको सीमाको अतिक्रमण गर्दैनन्..... आदि ।

र जब एक मुसलमान कसैलाई इस्लामतर्फ आव्हान गर्छ तब त्यो त्यस सोझो प्रकृतितर्फ बोलाउँछ जुन फितरत माथि स्रष्टाले सबैलाई सृष्टि गरेको छ । अर्थातः त्यो कुनै विरोधी तत्वतर्फ आमन्त्रित गरिरहेको छैन । र यो नै इस्लामको स्वीकार्य हुनुको सबै भन्दा टूलो रहस्य हो, किनकि जसलाई पनि यो थाहा भइहाल्छ कि इस्लाम धर्म हाम्रो फितरत अनुकूल धर्म हो त्यो तुरुन्तै यस इस्लाम धर्ममा प्रवेश भइहाल्छ, र त्यसको अनुयायी भई स्वर्गको अधिकारी भइहाल्छ ।

# इस्लाम विवेकको धर्म

जब विभिन्न धर्महरू र विभिन्न प्रकारका आस्थाहरू र निर्देशनहरू मनुष्यको अकल (विवेक)लाई हैरान पारिदियो, त्यस समय इस्लाम आफ्नो निर्देशन समेत प्रकट भयो, जुन आफ्नो समस्त निर्देशनको साथ मनुष्यको विवेकलाई समर्थन गर्छ ।

र कतिपय धर्मावलम्बीहरूलाई आफूले जुन धर्मको पालना गरिरहे छन् त्यसका निर्देशनहरूलाई हेरेर हृदय पीडा र असंतुष्टिको आभास भयो किनकि ती निर्देशनहरू उनीहरूको विवेकको विरोध गर्छन् । र कतिपय धर्महरू त धर्ममा विचार र चिन्तन् मनन् गर्नुबाट नै रोकेका छन्, र जुन निर्देशनहरू र आदेशहरू त्यस धर्ममा छन् त्यसलाई कार्यन्वयन गर्नु तर आफ्नो बुद्धि नलगाउनु भन्ने आदेश दिइएको छ । तर इस्लाम धर्म यी सबै धर्महरूको तूलनामा सबै धर्मबाट भिन्न छ। इस्लाम धर्मको यो महानता नै हो कि त्यो साँचो स्वच्छ र शुद्ध बुद्धिको समर्थन गर्छ। र कुरआन एवं हदीसमा जति पनि निर्देशनहरू छन् सबै विशुद्ध ज्ञान र विवेक अनुकूल छन् । यसैले गर्दा हामीलाई कुरआन र हदीसमा विचारगर्दा यो थाहा हुन्छ कि कुरआन र हदीस बुद्धिमत्तापूर्ण प्रमाणहरूबाट इस्लामी आस्थालाई सिद्ध गर्छ। जसरी अल्लाह माथि आस्था राख्नु, र त्यसका रसूल ( सन्देष्टा ) र फरिश्ताहरू माथि आस्था राख्नु, र प्रलयको दिनमाथि र मृत्युमाथि आस्था राख्नु, र पुनर्जन्म, दण्ड, पुरस्कार, पाप

पुण्य, स्वर्ग नर्क,....... आदि माथि आस्था राख्नु । यी सबैलाई इस्लाम यस्ता प्रमाणहरूबाट सिद्ध गर्छ जुन प्रत्येक मनुष्यको समझमा आउँछ ।

र यदि तिमी विचार गर मुश्रेकीन (बहुदववादीहरू)को वार्तालाप र प्रमाणहरू माथि जसबाट उनीहरू अल्लाहको वजूद र पूजनीयताको योग्यतालाई सिद्ध गर्न खोजेका थिए, त्यसमा पनि तिमी बुद्धिमत्ताको प्रष्टरूपमा प्रमाण पाउँछौ । अल्लाहले यस कुरालाई पवित्र कुरआनमा यसरी वर्णन गरेका छन् :

अर्थ : त्यो अल्लाह नै हो जसले तिमीलाई चट्याङ्गको चमक भयभीत गर्न र आशा दिलाउनको लागि देखाउँछ, र भारी बादलहरूलाई उठाउँछ । बिजुलीको गर्जना उसको पवित्रताको प्रशंसा गर्दछ, र फरिश्ताहरू पनि उसको भयबाट (त्यसै गर्दैछन्) । उही चट्याङ्ग पठाउँछ, र जस माथि चाहन्छ त्यस माथि खसाल्छ । जब कि तिनीहरू (बहुदेववादी) अल्लाहको वापत झैं-झगडा गरी रहेका छन्, र अल्लाह कठोर शक्तिवाला छ । उसैलाई पुकार्नु वास्तविक सत्य हो । जुन मानिस अरुलाई उसको बदलामा पुकार्छन् तिनीहरू उनीलाई केही पनि उत्तर दिदैनन्, बरु यो उस्तै छ जस्तो कुनै व्यक्ति आफ्नो दुवै हात पानीतर्फ फैलाएको छ कि उसको मुखमा परिजाओस् जबकी त्यो पानी उसको मुखमा जाँदैन । र काफिरहरूको गुहार सबै खेर जानेछ । अल्लाहको लागि नै पृथ्वी र आकाशका सबै प्राणीहरू खुशी र बेखुशी नतमस्तक हुन्छन् र उनका छायाँहरूले पनि विहान वेलुका । तपाई सोध्नुस्: “कि आकाशहरू र पृथ्वीको पालनकर्ता को हो ?”।

भनि दिनुस् ! "अल्लाह" । सोध्नुस्: ! "के तिमी फेरि पनि उस बाहेक अरुलाई सहयोगी बनाई रहेका छौ ? जो स्वयं आफ्नो जीव ज्यानको राम्रो नराम्रोबारे कुनै अख्तियारी राख्दैनन्" । सोधः "के अन्धो र आँखा वाला वराबर हुन सक्छन् ? के अन्धकार र प्रकाश समान हुन सक्छन् ? के जसलाई उनी अल्लाहको साझेदार ठहऱ्याई रहेका छन, उनले पनि अल्लाह जस्तै प्राणीहरू निर्माण गरेका छन्, जसले उनको दृष्टिमा निर्माणका फर्क शंकाको घेरा भित्र आइसकेको छ", भनि दिनुस्: "मात्र अल्लाह नै सबै प्राणीहरूको जन्मदाता हो त्यो एक मात्र एक्लो छ र विशाल शक्तिशाली छ ।" उसैले आकाशबाट पानी वर्सायो फेरि आफ्नो-आफ्नो क्षमता अनुसार खोलाहरू बग्न थाले, फेरि पानीको भेलले माथि चढेको कूडालाई बगाएर लग्यो । र यस्तै फींज त्यस धातुमा पनि उठीहाल्छ जुन आगोमा हालेर खारिए पछि आभूषण वा अर्को (सजावटका) समान बन्दछन् । यस्तै किसिमले अल्लाह सत्य-असत्यको उदाहरण प्रस्तुत गर्दछ । अब फीज त व्यर्थ भएर बगी हाल्छ, परन्तु जुन मान्छेलाई फाइदा पुऱ्याउने वस्तु छ, त्यो पृथ्वीमा अडी रहन्छ । अल्लाह यस्तै उदाहरणको वर्णन गर्दछ । ( सूरतुर्रअ्द १२-१७ )

र जब बहुदेववादीहरूले पुनर्जन्मको इन्कार गरे, र प्रलयको दिन र प्रतिफलको दिनको इन्कार गरे तब कुरआनले उनीहरूसंग बुद्धिमत्ताको प्रमाण र विवेकमा आउने तर्कहरूबाट वार्तालाप गऱ्यो, जुन प्रमाण र तर्कहरू पुनर्जन्म माथि आस्थाको वास्तविकता सिद्ध गरिरहेका थिए, र

बहुदेववादीहरूको त्रुटिलाई स्पष्ट पारिदैथे । जस्तो कि अल्लाहले पवित्र कुरआनमा वर्णन गर्नु हुन्छ :

अर्थ : र यदि हामीले उनीहरूमाथि दया गर्थ्यौं र उनीहरूको कष्ट हटायौं भने उनीहरू आफ्नो अट्टेरीपनमा अरु बहकी रहने छन् । यद्यपि हामीले उनीहरूलाई यातनामा समात्यौं तैपनि उनीहरू न आफ्ना पालनकर्ताको अगाडि नतमस्तक भए नत उनीहरू याचना नै गरे । यहाँसम्म कि हामीले जब उनीहरू माथि तीव्र सजायको ढोका खोलिदियौं तब त्यसबेला उनीहरू निराश भइहाले । र त्यही अल्लाह हो जसले तिम्रो लागि कान र आँखाहरू तथा हृदयहरू बनाए । तर तिमीले थोरै कृतज्ञता प्रकट गर्दछौ । र उही त हो जसले तिमीलाई सृष्टि गरेर पृथ्वीमा फैलाई दियो र उसैतिर तिमी एकत्रित हुने छौ । र उही हो जसले जीवन प्रदान गर्दछ, र मृत्यु दिन्छ र एकपछि अर्को आउने रात र दिन उसैको अधिकारमा छ, के तिमीले बुझ्दैनौ ? कुरा यो छ कि जुन कुरा अघिकाले भन्दथे, उस्तै प्रकारको कुरा यिनीहरूले पनि भन्दछन् । (भन्दछन्:) कि जब हामी मरेर माटो र हड्डीहरू भइहाल्नेछौं तै पनि के हामी फेरि उठाइने छौं र ? यो वाचा हामीसित र हामी भन्दा पहिला हाम्रा बाबु बाजेहरूसित पनि हुँदै आएको छ, यो त मात्र अघिका मानिसहरूका कथाहरू हुन् । सोध्नुस् त ज़मीन, र जेजति जमीनमा छन् (सबै) कसका सम्पत्ति हुन् बताऊ यदि थाहा छ ? तुरुन्त जवाफ दिनेछन्: कि अल्लाहको । भन्नुस् त्यसो भए तिमी किन नसीहत मान्दैनौ ? सोध्नुस् कि: सात आकाशहरूको स्वामी को हो र महान सत्तासनको मालिक को हो ? उनीहरूले

जवाफ दिनेछन्: कि अल्लाह नै हो, भन्नुस् कि त्यसो भए किन डर मान्दैनौ ? सोध्नुस् कि यदि तिमी जान्दछौ भने भनकी त्यो को हो जसको हातमा हरेक कुराको आधिपत्य छ र उसले शरण दिन्छ र उसको दाँजोमा कसैले कसैलाई शरण दिन सक्दैन । यही जवाफ दिनेछन्: कि अल्लाह नै हो । भन्नुस् की: त्यसो भए तिमीमाथि जादू कहाँबाट चल्छ ? ( सूरतुल् मुमिनून ७५-८९ )

र यी दुवै उदाहरण केवल कुरआनको यस दाबीलाई सिद्ध गर्नुको निम्ति हो जसमा यो दाबी छ कि कुरआन र इस्लाम धर्म अकल र विवेकलाई समर्थन गर्छन्, अर्थात: उल्लेखित उदाहरणबाट यो स्पष्ट भयो कि इस्लाम वास्तवमा बुद्धिमत्ताको धर्म हो ।

र इस्लाम जसरी आस्थालाई प्रमाणित गर्ने निर्देशनहरू द्वारा अकलको समर्थन गर्छ अर्थात अकलको विरोध गर्दैन, त्यसरी अरु प्रकारका निर्देशनहरू द्वारा पनि बुद्धि विवेकको समर्थन गर्छ । उदाहरण स्वरूप हेर्नुस् ! हलाल हराम अर्थात वैध अवैध गर्ने निर्देशनहरू, दुर्व्यवहार र व्यभिचार माथि टिप्पणी गर्ने निर्देशनहरू, अत्याचार अन्यायबाट मनाही गर्ने निर्देशनहरू ....आदि । यो सबै निर्देशनहरू यस्ता छन् कि यसलाई सुने बित्तिकै हाम्रो विवेक यी निर्देशनहरूलाई स्वीकार गरी हाल्छ, र हृदय प्रसन्नताले हर्षित भइहाल्छ ।

यस्तै धेरै ठाउँमा कुरआन मानवलाई विचारविमर्श र चिन्तन् मनन् गर्ने आदेश गर्छ, र आव्हान गर्छ कि तिमीहरू इस्लामका निर्देशनहरूमा चिन्तन मनन् गर र आफ्नो

बुद्धिलाई निस्पक्ष निर्णयको अधिकार प्रदान गर । अल्लाहको वर्णन छ :

अर्थ : र संसारिक जीवन त एउटा खेल र मनोरञ्जन बाहेक केही पनि होइन । र अत्यन्त राम्रो घर त आखिरतको घर हो तिनीहरूको निम्ति जो अल्लाहसित डरमान्छन्, के तिमीले बुझ्दैनौ ? ( सूरतुल् अनआम ३२ )

र आर्को ठाउँमा अल्लाहको भनाई छ :

अर्थ : तपाईं भन्दा पहिले मैले गाँउलेहरूमा जति पैगम्बर पठाएँ, सबै पुरुष नै थिए । उनीहरू तर्फ मैले सन्देश (वह्‌य) दिदै गएँ । के तिनीहरू पृथ्वीमा हिलडुल गरेर देखेनन् ? कि उनी भन्दा पहिलेका ब्यक्तिहरूको के कस्तो नतीजा भयो । वास्तवमा अन्तिम घर सहनशीलहरूको लागि धेरै राम्रा छन् । तै पनि तिनी सम्झन सक्तैनन् । ( सूरतु यूसुफ १०९ )

र जब बुद्धिमानहरू इस्लामी सिद्धान्तहरूमा मन्थन गर्छन् तब यस निष्कर्षमा पुग्छन् कि इस्लामी सिद्धान्तको मूल लक्ष्य अकललाई विचार विमर्सतर्फ प्रोत्साहन गर्नु हो । र अल्लाहको पूजातर्फ लगाउनु हो, र इस्लामी ज्ञान प्राप्तितर्फ उत्साहित गर्नु हो । जसमा संसारिक र परलौकिक भलाई नीहित छन्, र संसारिक ज्ञान एवं विद्या प्राप्त गर्नुतर्फ लगाउनु हो जसबाट सबैको जीवन राम्ररी व्यतीत हुन्छ ।

र यसै प्रकार इस्लामले अकल र सोच विचारलाई प्रगति प्रदान गर्छ र यस संदर्भमा ती सबै कुरालाई अवैध गरिदिएको छ जुन अकललाई हानि पुऱ्याउँछन् र ती सबै हानिकारक वस्तुहरूबाट अकलको सुरक्षा गर्छ । तसर्थ हाम्रो

अकललाई ठूलो मानसम्मान प्रदान गर्छ, यसको उदाहरण हो मदिरालाई वर्जित गर्नु । अल्लाहको फर्मान छ :

अर्थ : हे इमानवालाहरू ! मदिरा, जुआ बलिस्थान र शगुण पासा यी सबै अपवित्र र शैतानी कुराहरू मध्येका हुन् तसर्थ यिनीबाट टाढा रहनु ताकि मुक्ति प्राप्त गर्न सक । शैतान त यो चाहन्छ कि रक्सी र जुआको माध्यमबाट तिमीहरू बीच शत्रुता र बैरभावको सृजना गरिहालोस् र तिमीलाई अल्लाहको स्मरण र नमाजबाट रोकिदेओस् । यसकारण अहिले पनि (यी कर्महरूबाट) अलग रहने गर । ( सूरतुल् माइदः ९०,९१ )

बरु अल्लाहले ती सबै वस्तुहरूलाई वर्जित गरेको छ जसमा उन्मादको तत्व पाइन्छ त्यो चाहे जुन रूपमा पनि होस्, र जुन हाम्रो मस्तिष्कलाई हानि पुऱ्याउँछ । अल्लाहको अन्तिम सन्देष्टाको कथन छ : " प्रत्येक नशीलो पदार्थ मदिरा हो र हरेक नशीलो पदार्थ वर्जित छ, र जसले यस संसारमा मदिराको रसिया भई त्यसको सेवन गर्छ फेरि बिना तौबा ( क्षमायाचना ) त्यसको मृत्यु भयो भने त्यो परलौकिक जीवनमा मदिरा सेवनको अवसर पाउँदैन" । ( मुस्लिम किताबुल् अश्‌रिबा )

र आर्को ठाउँमा अल्लाहको रसूल भन्नु हुन्छ : " जुन नशीलो पदार्थको धेरै मात्रा उन्मादी बनाउँछ त्यसको थोरै मात्रा पनि हराम ( अवैध ) छ " । ( अबू दाऊद किताबुल् अश्‌रिबा, तिर्मिजी किताबुल् अश्‌रिबा )

# इस्लाम पवित्र धर्म

उपरोक्त वाक्यमा पवित्रताको अर्थ हो प्रतयेक रद्दोबदल, थपघट, र प्रत्येक बुराई एवं त्रुटिबाट पवित्र हुनु ।

वास्तविक पवित्रता त वास्तवमा इस्लाममा नै नीहित छ, किनकि यसका सबै निर्देशनहरू आकाशवाँणी द्वारा अल्लाह कहाँबाट अवतरित भएका छन्, र सबै निर्देशनहरू हाम्रोलागि सम्मानजनक छन् । र इस्लाम पवित्र छ किनकि त्यसको पहिलो संविधान र विधि कुरआन पवित्र छ, र सर्वप्रथम श्रेणीमा विराजमान छ । र कुरआनको पवित्रता मध्ये अनेकौं चमत्कारी कुराहरू छन् त्यस मध्ये विशेष गरी कुरआनको पवित्रता थपघट रद्दोबदलबाट पवित्र हुनु पनि हो, किनकि त्यसको सुरक्षाको जिम्मेवारी अल्लाहले आफै लिनु भएको छ । अल्लाहको फर्मान छ :

अर्थ : (निःसन्देह) हामीले नै कुरआनलाई उतारेका छौं र हामी नै यसको संरक्षक हौं । ( सूरतुल् हिज्र ९ )

अर्थात यस्तो उत्कृष्टतम् श्रेणी अल्लाहले मात्र कुरआनलाई प्रदान गरेको छ किनकि यस भन्दा पहिलाका ग्रन्थहरूको सुरक्षाको जिम्मेवारी अल्लाहले आफै लिएको थिएन बरु ती ग्रन्थहरूको सुरक्षाको जिम्मेवारी त्यसका अनुयायीहरू माथि नै थियो । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : हामीले नै तौरात उतार्‍यौं, जसमा मार्गदर्शन र प्रकाश थियो । त्यसै अनुसार नबी र ज्ञानीहरूले जो ( अल्लाहका) आज्ञाकारी थिए यहूदीमा यसै तौरात अनुसार

फैसला गर्दथे । किनभने तिनीहरूलाई अल्लाहको किताबको रक्षा गर्ने आदेश थियो, र तिनीहरू यसको गवाह पनि थिए, तसर्थ तिमी मानिसहरू सित नडराउनु र मसँग डर मान्नु र मेरो आयतहरूलाई अलिकति मूल्यमा न बेच्नु । जसले अल्लाहले प्रदान गरेको आदेशहरू बमोजिम फैसला गर्दैनन् तिनीहरू नै काफिर हुन् । ( सूरतुल् माइदः ४४ )

फेरि यो पनि हेर्नुस् कि जुन जिम्मेवारी अल्लाहले पहिलाका उम्मत (समूह)हरूलाई प्रदान गरेको थियो अनि त्यो जिम्मेवारी थियो **ग्रन्थहरूको सुरक्षा**, तर ती उम्मतीहरू त्यसको सुरक्षा नगरिकन् त्यसमा थपघट गर्न थाले, र यसै थपघटको कारण ती ग्रन्थहरूका निर्देशनहरू एकआर्काको विरोधी अर्थ दर्शाउन थाले, र एउटै ग्रन्थका अनेकौ ग्रन्थ बन्यो, र अल्लाहले प्रदान गरेका निर्देशनहरू त्यसबाट लुप्त भए । तर यी सबैको तुलनामा इस्लामी ग्रन्थ कुरआन आज पनि उस्तै सुरक्षित छ जस्तो आज देखि लगभग १४०० वर्ष भन्दा पहिला अवतरित भएको थियो, र यो आजको कुरआन त्यही कुरआन हो आफ्नो श्लोक र अक्षरहरू समेत जसरी १४०० पर्ष अघि थियो । तर कसैले पनि यसमा एउटा अक्षर पनि मिसाउन सकेनन् र अल्लाहको कबोल कति साँचो छ ।

र यस्तै कुरआनको पवित्रताको आर्को उदाहरण यो हो कि त्यसका निर्देशनहरू बीच कुनै प्रकारको टकराव (विरोधी अर्थ) मिल्दैन । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : के यिनीहरू कुरआनमा चिन्तन मनन् गर्दैनन् ? यदि यो अल्लाह बाहेक अरु कसैको तर्फबाट भएको भए

त्यसमा निःसन्देह (धेरै) विरोधाभाषपूर्ण कुराहरू पाउने थिए । ( सूरतुन् निसा ८२ )

र अल्लाहले आफ्नो पवित्र वाणी कुरआन भित्र कुनै प्रकारको विरोधी अर्थ एवं नकारात्मक तत्व राखेको छैन, बरु त्यो यी सबै तुच्छ कुराहरूबाट पवित्र छ, र यो त्यसको वाणी हुनुको सर्वप्रथम प्रमाण हो । कदाचित यो अरु कसैको तर्फबाट हुन्थ्यो भने अवश्य नै यसमा पनि विरोधी र नकारात्मक तत्व मिल्थ्यो जस्तो कि अरु ग्रन्थहरूमा देखिन्छ। र यो सबै प्रमाणहरू यो प्रमाणित गर्छन् कि कुरआन प्रत्येक भेदभाव र कलहबाट पवित्र छ । अनि कुनै कुरा जुन कुरआनको विरोध गर्छ त्यो निःसंदेह निराधार छ। र यो पवित्र कुरआन इस्लामको यस्तो अमर चमत्कार हो जुन सदैव बाँकी रहने छ।

र कुरआनको श्रेष्ठताको लागि यो पर्याप्त छ कि त्यसका विभिन्न प्रकारका विषय र शीर्षकहरू जुन आस्था, आदेश, वैध , अवैध, खबर, वृतान्त ..... आदिलाई दर्शाउछन् ती सबै शीर्षकहरूमा यति युग बीते पनि कसैले एउटा त्रुटि निकाल्न सकेनन् । बरु जेजति त्यसको आयतहरूमा परिक्षण निरक्षण र विश्लेषण गरे पश्चात उनीहरू माथि यो रहस्य खुल्यो कि विज्ञानले जति प्रगति अहिले सम्म गरेछ त्यसलाई त कुरआनले आजदेखि १४०० वर्ष अघि नै दर्शाइसकेको छ। र कतिपय वैज्ञानिकहरू त कुरआनको यस्तो चमत्कारबाट प्रभावित भई इस्लाम स्वीकार गरिसकेका छन् । र जुन सुकै व्यक्ति पनि कुरआनलाई स्वच्छ हृदयले पढछ र त्यसका

निर्देशनहरूमा विचार गर्छ त्यो निःसंदेह इस्लामी निर्देशनहरू माथि मोहित भई त्यसलाई स्वीकार गर्नेछ ।

र इस्लाम धर्म पवित्र छ किनकि जुन नबी (सन्देष्टा) माथि यो इस्लाम अवतरित गरियो ( उहाँको नाम मुहम्मद पुत्र अब्दुल्लाह हो ) त्यो सन्देष्टा पनि पवित्र छन् । त्यो सन्देष्टा बाहेक अरु कुनै मनुष्य तथा ऋषिमुनि यस सम्पूर्ण संसारमा त्रुटिहरू र दोषहरूबाट पवित्र छैनन् । तर यो उत्कृष्ट पद मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई उहाँको पालनकर्ताबाट प्रदान गरियो, जसले गर्दा उहाँलाई आफ्नो अन्तिम सन्देष्टा नियुक्त गरोस् । र यसै दूतत्वको कारण उहाँलाई हरेक दोष, पापबाट मुक्त एवं पवित्र गऱ्यो । अल्लाहको भनाई छ :

अर्थ : र उनी आफ्नो इच्छाले केही भन्दैनन् । त्यो त मात्र वह्य हो जुन (उनीमाथि) पठाइँदै छ । ( सूरतुन् नज्म ३,४ )

र अल्लाहले आफ्नो अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई उहाँको प्रत्येक क्रियाकलापमा पवित्र पारिदियो । उदाहरण स्वरूपः अल्लाहले उहाँलाई उहाँको युवा अवस्थामा पवित्रताको जीवित उदाहरण र आदर्श बनाउनु भयो । उहाँको स्वभाव, आचरण, व्यभिचारबाट टाढा रहनु, र अज्ञानता कालको सबै पापहरूबाट टाढा रहनु, सतय बोल्नु, झुठ र झुठ्ठाहरूबाट घृण गर्नु, मदिरा सेवनबाट टाढा रहनु, मूर्ति पूजन्बाट टाढा रहनु, ..... आदि । यो सबै अमानवीय कार्यहरूबाट अल्लाहले आफ्नो सन्देष्टालाई पवित्र राख्यो । किनकि यो सबै क्रियाकलापहरू इस्लाम विरोधी

हुनको साथ साथै समाज एवं सभ्यता र मानवताको पनि विरोधी हुन् ।

र उहाँ सदैव सत्य बोल्थे, सत्यलाई मन पराउँथे र अल्लाहले अवतरित गरेका निर्देशनहरू जस्ताको त्यस्तै आफ्नो उम्मत सम्म पुऱ्याउँथे । यो पनि उहाँको पवित्रता प्रमाणित गर्छ ।

र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको पवित्रता उहाँको जीवनीबाट पूर्ण रूपले स्पष्ट हुन्छ, जसले पनि उहाँको जीवनीको अध्यन गर्छ त्यो मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको पवित्रता र उनको सर्वश्रेष्ठ आचरण र स्वाभावको गुणगान गर्न थाल्छ । र यो सबै कुराहरू यो कुरालाई अनिवार्य गर्छन् कि हामी त्यस महान सन्देष्टाको अनुशरण गरौं, र त्यसै सन्देष्टाको जीवन शैली अपनाई उद्धार पाऔं ।

र इस्लाम धर्म पवित्र छ अर्थात प्रत्येक दोषबाट मुक्त छ किनकि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरू दोषमुक्त छन् । किनकि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरू कुनै दोष एवं असत्यमाथि कदापि एकजुट हुनसक्दैनन्, बरु जुन कुरोमाथि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरूको एकमत छ त्यो नै सत्य हो, र त्यसको विरोधी निःसन्देह निराधार छ । र यो विशेषता सबै उम्मतहरू मध्ये मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरूलाई मात्र प्राप्त छ । जस्तो कि अल्लहको फर्मान छः

अर्थ : हामीले यस्तै तिमीलाई मध्यमार्गी समुदाय बनाएका हौं जसबाट अरु मानिसहरूका साक्षी बन र (

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम ) पैगम्बर तिम्रो लागि साक्षी बनुन् र जुन किब्लामा तिमी पहिला देखि लागेका थियौ, त्यसलाई हामीले यस कारण निर्धारित गरेका थियौं ताकि थाहा होस् कि, को (हाम्रो) पैगम्बरको सच्चा अनुयायी हो र को हो जो विचलित हुन्छ ? यो काम गाह्रो छ, तर जसलाई अल्लाहले मार्गदर्शित गरेको छ । (तिनीहरूलाई गाह्रो छैन) । र अल्लाहले तिम्रा आस्थालाई निरर्थक तुल्याउने छैन । अल्लाह त मानिसहरूसंग अत्यन्त कृपा र दयाको व्यवहार गर्नेवाला छ । ( सूरतुल् बकर: १४३ )

अर्थात अल्लाहले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरूलाई प्रिय, सत्यवान निर्णायक बनायो । मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ :

अर्थ : निःसन्देह अल्लाह मेरो उम्मतलाई पथभ्रष्टतामा एकमत गर्दैन । ( तिर्मिजी )

तसर्थ जसमा उम्मत एकमत हुन्छ कुनै पनि युगमा त्यो नै सत्य ठहर हुन्छ त्यसमा कुनै संकोच एवं भ्रम छैन ।

र अल्लाहले जुन मान सम्मान मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरूलाई प्रदान गरेको छ त्यो मान सम्मान इस्लामी सिद्धान्तको महानताको प्रतीक हो । जस सम्मानित सीमामा रही मुस्लिमहरू एकमत रहुन् र विरोध र मतभेदबाट पर रहुन्, तसर्थ सबै एक हात जस्तो एकमत रही रहन्छन् । अल्लाहको फर्मान छ :

अर्थ : सबै मिलेर अल्लाहको डोरीलाई दृढतापूर्वक समाति राख्नु र विभाजित नहुनु र अल्लाहको त्यस अनुकम्पालाई यादगर कि जब तिमी एक अर्काको शत्रु थियौ,

त उसले तिम्रा हृदयहरूमा प्रेमको सृजना गऱ्यो र उसको कृपाले तिमीहरू आपसमा भाइ-भाइ भइहाल्यौ, र तिमी आगोको खाल्डो छेउ पुगिसकेका थियौ, त अल्लाहले तिमीलाई त्यसबाट बचाइहाल्यो । यस प्रकार अल्लाहले तिमीलाई आफ्ना निशानीहरूको वर्णन गर्दछ ताकि तिमी मार्गदर्शन प्राप्त गर्नसक । ( सूरतु आले इम्रान १०३ )

र यस धर्म इस्लामको विशालता मध्ये यो पनि हो कि यसको पवित्रता त्रीकोणीय छ, कुरआनको पवित्रता सन्देष्टाको पवित्रता र उम्मतको पवित्रता । अर्थात यस धर्मको पवित्रता र दोषमुक्तता सबै तर्फबाट घेरिएको छ अब यस भन्दा पवित्र कुनै पनि हुनसक्दैन चाहे जुन सुकै पनि होस् चाहे त्यो कुनै हाकिम अथवा मुखिया होस् वा कुनै निरक्षणकर्ता होस्, बरु सबैको कुरालाई यस कुरआन र हदीस र यस उम्मतको एकमत्ताको कसौटीमा पर्खे पश्चात यदि त्यो कुरो कुरआन र हदीस एवं उम्मतको एकमत अनुकूल छ भने त्यो सत्य र स्वीकार्य हुनेछ । तर यदि त्यो कुरो यस विरुद्ध छ भने अस्वीकार्य हुनेछ यद्यपि त्यो कुरा मान्नेवाला आफ्नो यस प्रयासमा दोषी ठहर हुँदैन यदि त्यसको इच्छा राम्रो गर्नु थियो भने ।

# इस्लाम दयाको धर्म

अल्लाह आफ्नो भक्तहरू माथि करुणावान एवं दयावान छ जस्तो कि आफ्नो पवित्र ग्रन्थमा भनेछ :

अर्थ : हामीले यस्तै तिमीलाई मध्यमार्गी समुदाय बनाएका हौं जसबाट अरु मानिसहरूका साक्षी बन र ( मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम) पैगम्बर तिम्रो लागि साक्षी बनुन् र जुन किब्लामा तिमी पहिला देखि लागेका थियौ, त्यसलाई हामीले यस कारण निर्धारित गरेका थियौं ताकि थाहा होस् कि, को (हाम्रो) पैगम्बरको सच्चा अनुयायी हो र को हो जो विचलित हुन्छ ? यो काम गाह्रो छ, तर जसलाई अल्लाहले मार्गदर्शित गरेको छ। (तिनीहरूलाई गाह्रो छैन)। र अल्लाहले तिम्रो आस्थालाई निरर्थक तुल्याउने छैन। अल्लाह त मानिसहरूसंग अत्यन्त कृपा र दयाको व्यवहार गर्नेवाला छ। ( सूरतुल् बकर: १४३ )

र जस्तो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले अल्लाहको बारेमा खबर दिनु भएछ एउटा उदाहरणको माध्यमबाट र यस हदीसलाई हजरत उमर बिन खत्ताब रजीअल्लाहो अन्होले वर्णन गर्नु हुन्छ कि " रसूल सल्लल्लाहो अलैहे वसल्लम समक्ष केही बन्दीहरू ल्याइए त्यस मध्ये एउटी दासी आईमाई पनि थिई, तत पश्चात त्यस दासीले आफ्नो सानो शिशुलाई हेऱ्यो अनि हर्षित भएर त्यसलाई आफ्नो छातीसित लगायो, फेरि त्यसलाई दूध खुवायो तब रसूल सल्लल्लाहो अलैहे वसल्लमले हामीसित प्रश्न गर्नु भयो कि के

तिमीहरूलाई यो आभास हुन्छ कि यो युवती आफ्नो यस बच्चालाई आगोमा फाल्न सक्छे? त हामीले भन्यौं होइन हजुर त्यो युवती कदापि यस्तो गर्न सक्दैन । तब रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो ! अल्लाह आफ्नो भक्तहरू माथि यस युवतीको आफ्नो शिशु माथि स्नेह एवं प्रेम भन्दा अझै करुणामय र दयावान छ " । ( बुखारी किताबुल् अदब )

र अल्लाह वास्तवमा समस्त संसारको लागि दयावान छ यसै कारण उसले यस संसारमा आफ्नो सन्देष्टाहरूलाई पठायो कि सन्देष्टाहरू सबैलाई सुमार्गमा लगाई सबैलाई अल्लाहको दयाको पात्र बन्ने अवसर प्रदान गरुन् ।

र यस्तै समस्त आकास्मिक धर्महरू त्यस अल्लाहको दयाको खुल्ला उदाहरण हुन्, र प्रत्येक धर्म जसको अनुयायीहरू दयावान हुन्छन् त्यो पनि अल्लाहको दयाको प्रमाण हो । र अन्तमा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई सम्पूर्ण संसारको लागि पथप्रदर्शक र दयाको प्रतीक बनएर पठायो, यो पनि त्यसको दयाको अनौठो चमत्कार हो । अल्लाहको फर्मान छ :

अर्थ : र (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम !) हामीले तपाईलाई सम्पूर्ण जगतको निम्ति सर्वथा दयाको प्रतीक बनाएर पठाएका छौं । ( सूरतुल् अम्बिया १०७ )

र यस्तै कुरआनलाई पथप्रदर्शक, दयामय, र सबै प्रकारको रोगबाट मुक्तिकर्ता बनाएर अवतरित गऱ्यो, यो पनि त्यसको करुणको निशानी र तर्क हो । अल्लाहको फर्मान छ :

अर्थ : निःसन्देह हामीले यसलाई एउटा बरकतले भरिएको रातमा अवतरित गरेका छौं, हामी त मार्ग

देखाउनेवाला हौं । त्यसै रातमा तमाम तत्वदर्शीयुक्त कुरा निर्णीत एवं स्पष्ट गरिन्छ । हामी कहाँबाट आदेश भएर, निःसन्देह हामीले नै पैगम्बरलाई पठाउँछौं । तिम्रो पालकर्ताको दयालुता हो । निःसन्देह त्यो सबै कुरा सुन्नेवाला जान्नेवाला छ । ( सूरतुद्दुखान ३-६ )

र त्यस अल्लाहको दया मध्ये मुहम्मद जस्तो करुणामय सन्देष्टालाई हामीहरूको लागि नियुक्त गऱ्यो । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : (हे मानिसहरू हो !) तिमीहरूको माझमा तिमीहरूमध्येबाटै एउटा पैगम्बर आएका छन् । तिम्रो पीडाबाट उनी दुःखी हुन्छन् र तिम्रो भलोको निम्ति चिन्तित रहन्छन्, र ईमानवालाहरूलाई निकै माया गर्ने र दयालु छन् । ( सूरतुत्तौबः १२८ )

र रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो त्यस आचरणलाई स्पष्ट पार्नु भयो जुन आचरण अल्लाहले उहाँलाई जन्मदेखि नै प्रदान गर्नु भएको थियो, र जसतर्फ सबैलाई आव्हान गर्ने आदेश गरियो र विरोधीहरू माथि अल्लाहको प्रकोपको श्राप दिइयो । रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो " म कसैलाई श्राप दिनुको निम्ति पठाइएको छैन बरु दया गर्नुको लागि पठाइएको हूँ " । ( मुस्लिम किताबुल् बिर्रे वस्सिला वल्अदब )

र दया एवं परोपकार इस्लामको प्रत्येक निर्देशनमा देखिन्छ, जस्तो कि यो धर्म आफ्नो अनुयायीहरूको लागि लाभदायक कार्य गर्ने आग्रह गर्छ, र हानिकारक कुराबाट रोक्छ । विशुद्ध र पोशीला खाद्यान्नलाई हलाल (ग्राह्य) र अशुद्ध

पदार्थलाई अवैध गर्छ । र यस्तै यो धर्म आफ्नो अनुयायीहरूलाई कदापि उनको क्षमता भन्दा अधिक कर्म गर्नुको माँग गर्दैन, बरु सबैलाई आफ्नो क्षमता अनुसार कर्म गर्ने निमन्त्रण दिन्छ ।

र यस्तै उनीमाथि ती सबै कर्म र क्रियाकलाप वैध गर्छ जसमा हानि नोक्सानी छैन, र जसबाट समाजको उन्नति हुन्छ । र ती सबै क्रियाकलापलाई अवैध ठान्छ जसबाट समाजमा विगार उत्पन्न हुन्छ, जस्तो कि चोरी, अन्याय, अत्याचार, दुरव्यवहार, दुराचार, हिंसा....आदि । यी सबै कुराहरू अल्लाहको दयालाई प्रदर्शित गर्छन् ।

र यस्तै यो पनि अल्लाहको दया नै हो जसले गर्दा अल्लाहले अन्यायीहरूको लागि दण्ड दिने विधि ल्यायो, तसर्थ इस्लाममा जसले पनि दण्डनीय कार्य गर्नेछ त्यसलाई दण्ड अवश्य मिल्ने छ, यसले गर्दा उदण्डहरू र पाखण्डीहरू सावधान भई भयत्रास खान्छन् जसले गर्दा हाम्रो समाज प्रत्येक कुकर्मबाट मुक्त हुदै जान्छ । र जुन मान्छे माथि अन्याय भएछ त्यसको सहायताको लागि र सत्यता माथि सत्यवानहरूलाई सुदृढ गर्नुको निम्ति कुकर्मीलाई दण्डित गरिन्छ । फलस्वरूप समाज सबै पाखण्डबाट मुक्त भइहाल्छ । अल्लाहको फर्मान छ :

अर्थ : हे विवेकीहरू ! केसासको (आदेश) मा तिम्रो लागि जिन्दगी छ, यसले गर्दा तिमीहरू (अनाहक़ हत्याबाट) सुरक्षित रहनेछौ । ( सूरतुल् बकर: १७९ )

र इस्लाम धर्मको दयावान हुनुको प्रमाण मध्ये यो पनि हो कि यस धर्मले आफ्नो अनुयायीहरूलाई यो आदेश दिन्छ

कि एकआर्काको साथ दयाभावको व्यवहार गरुन्, सानो ठूलालाई सम्मान गरोस्, र ठूलो सानालाई स्नेह गरोस् । र शक्तिशाली व्यक्ति आफू भन्दा निर्वल माथि दया गरोस्, र दुर्बल मान्छे आफ्नो शक्तिवान भाइको सम्मान गरोस् । अर्थात सबै एकआर्का माथि दया गरुन् । रसूल सल्लल्लाहो अलैहे वसल्लम भन्नु हुन्छ : " दयावानहरू माथि अल्लाहको दया हुन्छ, तिमीहरू यस धरतीमा बस्नेहरू माथि दया गर, तिमीहरू माथि त्यो दयावान दया गर्नेछ जुन आकाशमा छ " । ( मुस्नद अहमद )

र यसै दया मध्ये शिशुहरू र सानो बच्चाहरू माथि दया गर्नु पनि हो, जसको अनौठो उदाहरण मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम स्वयम् थिए । मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम सानो बच्चाहरूलाई स्नेहले चुमदथे एउटा हदीसमा वर्णन छ कि " एक दिन एउटा गाँउले हजुर सल्लल्लाहो अलैहे वसल्लमको समक्ष आयो र भन्योः तपाईहरू बच्चाहरूलाई चुमनु हुन्छ हामी त चुमदैनौं ? त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयोः कि अल्लाह बाहेक कुनै शक्ति पनि तिम्रा हृदयमा दया हाल्न सक्दैन " । ( बुखारी )

यस्तै एक दिन अकरअ् बिन हाबिसले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई हेर्नु भयो कि उहाँ हसन बिन अलीलाई चुमीराखेका छन्, त अकरअ्ले भन्नु भयो म सित १० छोराहरू छन् तर मैले कसैलाई पनि चुमे छैन । त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयोः जसले दया गर्दैन त्यसमाथि पनि दया गरिदैन । ( मुस्लिम )

र इस्लामको दयाको आर्को उदाहरण हो यस धर्मको यो आदेश कि आफ्नो बुवा आमा माथि परोपकार गर, र उनीहरूको अधिकारलाई अल्लाहले आफ्नो अधिकारबाट तुलना गरेको छ । र आमा र बुवाको अधिकार अल्लहको अधिकार पश्चात सर्वप्रथम अधिकार बताइएको छ । जसरी हदीसमा वर्णन छ कि जब रसूल सल्लल्लाहो अलैहे वसल्लम सित सोधियो कि अल्लाहको नजिक सबै भन्दा प्रिय कार्य के के हुन्? त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: नमाज कायम गर्नु त्यसको निर्धारित समयमा, फेरि सोधियो त्यस पश्चात कुन कार्य अल्लाहको नजिक प्रिय छ ? त उहाँले भन्नु भयो: आफ्नो बुवा आमामाथि उपकार गर्नु हो । ( बुखारी )

इस्लामले बुवा आमालाई यति ठूलो पद प्रदान गरेको छ कि बुवा आमा काफिर (नास्तिक) भए पनि उनीहरू माथि उपकार गर्ने आदेश छ। अल्लाहको फर्मान छ:

अर्थ : र हामीले मानिसलाई उसको आमा-बाबुको सम्बन्धमा सचेत गरेका छौं, कि यसको आमाले कष्टमाथि कष्ट सहेर उसलाई गर्भमा बोकी राख्छे र दुई वर्षमा उसको दूध छोडाउनु पर्ने हुन्छ ! जसबाट तिमीले मेरो र आफ्नो आमा बाबुको कृतज्ञता प्रकट गर । (किनकि) मतिरै फर्कि आउनु पर्नेछ। र यदि ती दुबैले तिमीहरूमाथि यसकुराको दबाव दिन्छन्, कि तिमीले कसैलाई मेरो साथमा साझीदार ठहराऊ जसका तिमीलाई ज्ञान छैन, त उनीहरूको कुरा नमान्नु र सांसारिक कामहरूमा उनीहरूको राम्रो साथ दिनु, र जुन व्यक्ति मतिर प्रवृत हुन्छ, उसको मार्गमा हिंड्नु । र

तिमी सबैलाई मतिर फर्कि आउनु छ । अनि जुन काम तिमी गरिराखेका हुन्छौ, म तिमीलाई सबै बताउनेछु । ( सूरतु लुकमान १४,१५ )

र आर्को सूरत्मा अल्लाहको फर्मान छ :

अर्थ : र तिम्रो पालनकर्ताले स्पष्ट आदेश गरेको छ कि ऊ बाहेक तिमी कसैको पूजा नगर र आमा-बाबुको साथमा नम्र व्यवहार गर्दै गर यदि तिनीहरू मध्ये एउटा वा दुवै तिम्रो अगाडि वृद्ध अवस्थामा पुग्छन् भने तिनीहरूलाई तिरस्कृत नगर्नु नहप्काउनु अपितु तिनीहरूसँग सम्मानपूर्वक मर्यादित ढंगले कुराकानी गर्नु । र विनम्रतापूर्वक प्यारका साथ तिनीहरूको अगाडि सुशील भइराख र तिनीहरूको निम्ति प्रार्थना गर्ने गर: कि हे पालकर्ता जुन प्रकार कि तिनीहरूले मलाई बाल्यावस्थामा (मायाँले) पालन-पोषण गरेका छन्, तिमीले पनि तिनीहरूमाथि त्यस्तै दया गर । जे जति तिम्रो हृदयहरूमा छ, तिम्रो पालनकर्ताले त्यसलाई राम्ररी जान्दछ । यदि तिमी असल कर्म गर्दछौ भने उसले त्यसतिर प्रवृत्त हुनेहरूलाई क्षमा गरिदिनेछ । ( सूरतुल् इस्रा २३-२५ )

र यस्तै इस्लामको दया मध्ये अल्लाहको ती निर्देशनहरू पनि हुन् जसमा अल्लाहले महिलाहरूसंग करुणामय व्यवहार गर्ने आदेश दिएको छ । किनकि महिलाहरू स्वाभाविक रूपले कोमल एवं निर्बल हुन्छिन्, र विशेषरूपले पुत्री र आमाको अधिकारलाई ध्यानमा राखि यी दुवैमाथि दया गर्नु अनिवार्य गरिएको छ । र आमाको अधिकार पुत्रमाथि बुवा भन्दा तीन गुना अधिक हुन्छ , किनकि आमालाई बुवा भन्दा अधिक दया र उपकारको आवश्यकता हुन्छ । रसूल सल्लल्लाहो अलैहे

वसल्लमको भनाई छ जब यो प्रश्न गरियो कि सम्मानको अधिकार मनुष्य माथि सबै धन्दा धेरै कस्को छ ? त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: तिम्रो आमाको । फेरि तिम्रो आमाको, फेरि तिम्रो आमाको, अनि तिम्रो बुवाको , फेरि तिम्रो आफन्तीहरूको, अनि क्रमश: इत्यादिको ... । ( मुस्लिम )

र यस्तै आफ्नो स्वास्नीसंग राम्रो व्यवहार गर्नु पनि दयाको एउटा भाग हो । र श्रीमती माथि उपकार गर्नु जस्तो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले स्वास्नीहरू माथि दया गर्नु र राम्रो व्यवहार गर्नुको आदेश दिनु भएछ । र स्वास्नी माथि दयावानलाई सबै भन्दा सत्यवान ठहर गरेका छन् । रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ : " सबै भन्दा राम्रो व्यक्ति त्यो हो जुन आफ्नो जहानको निकट राम्रो छ, र म आफ्नो जहानको निकट सबै भन्दा राम्रो व्यक्ति छु " । ( तिर्मिजी )

र इस्लामको दयाको उदाहरण मध्ये टुहुरो माथि दया गर्नु पनि हो । अल्लाहले टुहुरोको पालनपोषण गर्ने र त्योसंग दया र स्नेह गर्ने, त्यसको सत्कार गर्ने... आदि । यी गर्नेहरूलाई अल्लाह स्वर्गमा अग्लो अग्लो स्मार्क प्रदान गर्छ, र रसूल सल्लल्लाहो अलैहे वसल्लमको संगतको सुअवसर पनि प्रदान गर्छ ।

रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ : " म र टुहुरोको सेवा सत्कार गर्नेवाला स्वर्गमा यसरी हुन्छौं, र आफ्नो औंलाबाट संकेत गर्नु भयो, र बीचको औंला र

शहादतको औला अर्थात बुढी औलालाई अलिकति पर गर्नु भयो" । ( बुखारी )

र यस्तै एउटा मान्छेले आफ्नो हृदयको कठोरताको बारेमा रसूल सल्लल्लाहो अलैहे वसल्लम कहाँ गुनासो गर्‍यो त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " टुहुरोलाई सहारा देऊ र त्यसमाथि परोपकार गर, र असहायहरूलाई भोजन गराऊ " । ( मुस्नद अहमद )

र यस्तै इस्लामको दयाको उदाहरण मध्ये सबै निर्बल, दरिद्र, असहाय माथि उपकार गर्ने आदेश पनि हो । अल्लाहको रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भएछ : " बन्दीहरूलाई मुक्त गर, र भूखोलाई भोजन गराऊ, र विरामी मान्छेको हेरचाह गर " । ( बुखारी )

र इस्लामको दया केवल मुस्लिम समुदायमा सीमित छैन बरु इस्लाम मुसलमानहरूलाई गैर मुस्लिमहरू माथि पनि दया गर्ने पाठ पढाएको छ । र गैर मुस्लिम माथि दया गर्नुको पहिलो चरण यो हो कि मुसलमान त्यसलाई इस्लाम तर्फ आव्हान गरोस् र त्यसलाई कुकर्मको अन्धकारबाट सावधान गरोस्, र अल्लहको सत्य धर्मबाट विमुख हुनुको दुष्परिणामबाट सावधान गरोस्, र अल्लाहको दुखद यातनाबाट सावधान गरी त्यसलाई नर्कबाट बचाओस् ।

के यो इस्लामको उत्कृष्ट दया र परोपकार होइन त अरु के हो ? कि इस्लाम समस्त मानवजातिको भलाई चाहन्छ र सबैलाई सुख शान्तिको मार्गमा लगाई स्वर्गको पात्र बनाउन चाहन्छ, र जुन शान्तिको मार्गतिर इस्लामले हामीलाई लगाउन खोजेको छ त्यो मार्ग इस्लाम नै हो, यही मार्ग नै

अल्लहको सत्य र सदैव कायम रहनेवाला मार्ग हो । अल्लहको भनाई छ :

अर्थ : (हे पैगम्बर !) मानिसहरूलाई बुद्धिमत्ता र असल उपदेशले आफ्नो पालनकर्ताको बाटोतिर बोलाउनुस् र सधै राम्रो तरिकाले तिनीहरू सित कुरा गर्नुस्, जो उसका बाटोबाट बिचलित छन् तपाईको पालनकर्ताले तिनलाई पनि राम्ररी जान्दछ र जो सही मार्गमा हिड्नेहरू छन् उनीहरूलाई पनि राम्ररी जान्दछ । ( सूरतुन् नहल १२५ )

र मुस्लिमहरूको दया र परोपकार गैर मुस्लिमहरू माथि अति संकुचित र कष्टदायक अवस्थामा पनि प्रकट ( छर्लङ्ग ) हुन्छ, जस्तो कि **युद्ध अवस्था**, इस्लाममा युद्ध अवस्थामा पनि विधिहरू छन् त्यसको अतिक्रमणको आदेश इस्लाम कदापि दिदैन, जसरी कमजोर, महिला, बच्चाहरू ... आदि सबैमाथि प्रहार गर्नुबाट युद्धमा पनि इस्लामिक विधि अनुसार वर्जित छ । यस्तो दयालुताको उदाहरण पूर्ण संसारमा पनि भेटिदैन ।

र इस्लाममा दया र करुणा मात्र मानवजातिको लागि कहाँ सीमित छ र ? बरु समस्त संसारमा बस्ने जीवधारीको लागि पनि छ, र समस्त जीवधारीहरू माथि दया गर्ने आदेश इस्लाम आफ्ना अनुयायीहरूलाई दिन्छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भएछ : “ कि एक दिनको कुरो हो कि एउटा मान्छे यात्रामा थियो अनि त्यसलाई तिर्खा लाग्यो, अनि त्यो मान्छे एउटा इनार निकट आयो अनि त्यो इनारबाट पानी खायो र हिंडने बेला त्यस मान्छेले एउटा कुकुरलाई हेऱ्यो जसको जिब्रो तिर्खाले बाहिर निस्केको थियो, अनि त्यस व्यक्तिले विचार गऱ्यो कि जसरी मलाई तिर्खा लागेको थियो

उस्तै यस कुकुरलाई पनि अवश्य तिर्खा लागेको होला, अनि त्यो व्यक्ति फेरि इनार निकट आयो र आफ्नो मोजाको सहायताले त्यस कुकुरलाई पानी खुवायो, र आफ्नो यस कार्यको लागि अल्लाहको कृतज्ञता प्रकट गर्‍यो, अनि अल्लहले यसै कर्मको कारणले त्यस ब्यक्तिलाई मुक्ति प्रदान गर्‍यो । त रसूल सल्लल्लाहो अलैहे वसल्लमको साथीहरूले सोधे हे अल्लाहको रसूल के हामीहरूलाई जनावरहरू माथि परोपकार गरेमा पुण्य मिल्छ ? रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयोः अवश्य बरु प्रत्येक जीवधारीको सेवामा पुण्य मिल्छ ” । ( बुखारी )

# इस्लाम मध्यमार्गी धर्म

इस्लाम धर्म सबै धर्म मध्ये माध्यमिक एवं मध्यमार्गी धर्म हो, र यो यस धर्मको विशेषता मध्ये एक हो । अल्लाहको कथन छ :

अर्थ : हामीले यस्तै तिमीलाई मध्यमार्गी समुदाय बनाएका हौं जसबाट अरु मानिसहरूका साक्षी बन र ( मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम ) पैगम्बर तिम्रो लागि साक्षी बनुन् र जुन किब्लामा तिमी पहिला देखि लागेका थियौ, त्यसलाई हामीले यस कारण निर्धारित गरेका थियौं ताकि थाहा होस् कि, को (हाम्रो) पैगम्बरको सच्चा अनुयायी हो र को हो जो विचलित हुन्छ ? यो काम गाह्रो छ, तर जसलाई अल्लाहले मार्ग-दर्शित गरेको छ । (तिनीहरूलाई गाह्रो छैन) । र अल्लाहले तिम्रा आस्थालाई निरर्थक तुल्याउने छैन । अल्लाह त मानिसहरूसंग अत्यन्त कृपा र दयाको व्यवहार गर्नेवाला छ । ( सूरतुल् बकरः १४३ )

यस आयतमा मुसलमान र इस्लामको प्रशंसा गरिएको छ किनकि इस्लाम र मुस्लिमहरूको संतुलित अवस्था र संतुलित क्रियाकलापमा विश्वास छ, किनकि मुस्लिमहरूले अरु समुदायहरू जस्तो सीमा अतिक्रमण गर्दैनन्, र त्यसै समय कर्म गर्नुमा कुनै कमी कोताही गर्दैनन्, बरु आफ्नो सबै क्रियाकलापमा माध्यमार्ग अपनाउँछन् । र मध्यमार्गीको अर्थ हो जसरी कअ्बा धरतीको बीचोबीच स्थित छ त्यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमको उम्मत बीचको

धर्मावलम्बी हुन् । अर्थात यस उम्मतको पद समस्त नबीहरू भन्दा तल र सबै उम्मतहरू भन्दा माथिको श्रेणीमा विराजमान छन् ।

यस उम्मतको मध्यमार्गी हुनुको अर्थ मध्ये यो पनि हो कि यो उम्मत ( समूह ) अरु उम्म्तको तूलनामा निष्पक्ष निर्णय गर्नेवाला हुन् । र यस्तै अल्लाहले सबै उम्मत मध्ये रसूल सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरूलाई सबै उम्मतीहरू माथि साक्षी बनाएको छ, यसको कारण पनि यिनीहरूको मध्यमार्गी हुनु सिद्ध हुन्छ। अल्लाहको फर्मान छ :

अर्थ : हामीले यस्तै तिमीलाई मध्यमार्गी समुदाय बनाएका हौं जसबाट अरु मानिसहरूका साक्षी बन र ( मोहम्मद स.अ.) पैगम्वर तिम्रा लागि साक्षी बनुन् र जुन किब्लामा तिमी पहिला देखि लागेका थियौ, त्यसलाई हामीले यस कारण निर्धारित गरेका थियौं ताकि थाहा होस् कि, को ( हाम्रो) पैगम्बरको सच्चा अनुयायी हो र को हो जो विचलित हुन्छ ? यो काम गाह्रो छ, तर जसलाई अल्लाहले मार्ग-दर्शित गरेको छ । (तिनीहरूलाई गाह्रो छैन) । र अल्लाहले तिम्रा आस्थालाई निरर्थक तुल्याउने छैन। अल्लाह त मानिसहरूसंग अत्यन्त कृपा र दयाको व्यवहार गर्नेवाला छ । ( सूरतुल् बकर: १४३ )

र यस उम्मतीको साक्षी हुनुको एउटा उदाहरण यो हो कि प्रलयको दिन जब अल्लाह रसूलहरू सित सोध्छ कि तिमीहरूले मैले दिएका निर्देशनहरूको पूर्णतः प्रचार प्रसार गऱ्यो र आफ्नो जाति बन्धुलाई पुऱ्यायो ? र उनीहरूको उम्मतहरू भन्छन् कि हामीहरू समक्ष तिम्रो निर्देशन पुगेन ।

अनि सबै नबीहरू र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरू नबीहरूको पक्षमा साक्ष्य दिन्छन् ।

र मध्यमार्गीको अर्थ मध्ये राम्रो र उत्तम हुनु पनि हो । मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मत अल्लाह निकट सबै उम्मतीहरू भन्दा उत्तम र राम्रो उम्मत हो । अल्लहको फर्मान छ :

अर्थ : (मोमिनहरू !) मानिसहरूका लागि पैदा गरिएको सबै सम्प्रदायहरू मध्ये तिमीहरू सबैभन्दा उत्तम हौ किनकि सत्कर्म गर्न भन्दछौ र दुष्कर्मबाट टाढा रहन सिकाउँदछौ र अल्लाहमाथि आस्था राख्दछौ र यदि अहले किताबले पनि आस्था राखेको भए तिनीहरूको निम्ति धेरै राम्रो हुने थियो । तिनीहरू मध्ये ईमानवालहरू पनि छन् र धेरै जसो अवज्ञाकारीहरू छन् । ( सूरतु आले इम्रान ११० )

र मध्यमार्गीको अर्थ अतिक्रमणकारी र विमुखहरू एवं कठोरता र अल्छीपनाको बीच रही कर्म गर्नु पनि हो । र यो इस्लाम प्रत्येक क्रियाकलापमा बीचको मार्गलाई सर्वोचता प्रदान गर्छ । र थपघट त समस्त कार्यहरूमा निन्दनीय नै छ यसै कारण थपघट एवं कठोरता र अल्छीपनाको कारण नै पहिलाका उम्मतहरू पथविचलित भए ।

र यो मध्यमार्गी अर्थ इस्लामको हरेक निर्देशनमा हेर्न सकिन्छ । जसरी "**इस्लामी आस्था**" जब प्रत्येक उम्मतहरू सत्य आस्थाबाट विमुख भइहाले त अल्लाहले मुसलमानहरूलाई सत्य आस्था तर्फ पथप्रदर्शन गऱ्यो । र जब यहूदीहरूले अल्लाहको विशेषताबारे मिथ्या कुरा गरे जसलाई अल्लहले कुरआनमा यस्तो वर्णन गरेछ :

अर्थ : निश्चय नै अल्लाहले तिनको भनाई पनि सुनिहाल्यो जसले भन्दछन् कि अल्लाह गरीब छ र हामी धनि छौं । उनको यस भनाईलाई हामीले लेखिलिने छौं र उनीहरूले पैगम्बरहरूलाई बिना दोष मारिराखेको कुरा पनि, र हामीले भन्ने छौ कि बलिरहेको आगोको सजाय भोगीराख । ( सूरतु आले इम्रान १८१ )

र आर्को डाउँमा वर्णन छ :

अर्थ : र यहूदीहरूले भने कि अल्लाहको हात बाँधिएको छ, (तर वास्तवमा) तिनीहरूकै हात बाँधिएको छ । र यस भनाईको कारण तिनीहरू तिरस्कृत भए बरु अल्लाहका दुवै हात खुल्ला छन् । जुन किसिमबाट र जति चाहन्छ खर्च गर्दछ । र (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम !) यो ( कुरआन) जुन तिम्रो पालनकर्ताबाट तिम्रो लागि उतारिन्छ, यसको सन्दर्भमा तिनीहरूमध्ये धेरैको हठपूर्ण विद्रोह र इन्कारमा बृद्धि हुनेछ र हामीले तिनीहरूको आपसी शत्रुता र छलकपट कियामतको दिनसम्मलाई राखिदिएका छौं । यिनीहरूले जब युद्धको ज्वाला दन्काउँछन्, तब अल्लाहले त्यसलाई निभाइदिन्छ यिनीहरूले धरतीमा उपद्रव र झगडा गर्न दगुरी रहन्छन् र अल्लाहले उपद्रवीहरूलाई प्रेम गर्दैन । ( सूरतुल् माइदः ६४ )

र यस्तै भने कि अल्लहलाई धरती आकाशको सृजना पश्चात थकाई लाग्यो, अनि अल्लाहले शनीवारको दिन विश्राम गऱ्यो । यी सबै मिथ्या कुराहरूलाई मुसलमानहरूले नकारेर अल्लाहले बताएको मार्गमा अग्रसर रहे ।

र यस्तै ईसाईहरूले अल्लाहको विशेषताहरू जुन मात्र अल्लाहका लागि छन् मनुष्यलाई प्रदान गरे, र भने कि ईसा अलैहिस्सलाम सृष्टि गर्छन्, अनुकम्पा दिन्छन्, दया गर्छन्, मनुष्यको पापलाई क्षमा गर्छन्, दण्ड र प्रतिफल उनको हातमा छ ..... आदि । ईसाईहरू उपरोक्तका निराधार कुराहरू गर्छन् । तर मुस्लिमहरू अल्लाह जस्तो कसैलाई पनि मान्दैनन् र भन्छन् कि अल्लाहको कुनै समकक्षी छैन । जस्तो कि अल्लाहले कुरआनमा भनेको छ :

अर्थ : र न कोही उसको समकक्ष छ । ( सूरतुल् इख्लास ४ )

र अल्लाहको लागि त्यो सबै विशेषताहरू प्रमाणित गर्छन् जसलाई अल्लाहले आफ्नो लागि विशेष गरेका छन्, जुन कि कुरआन र हदीसमा उल्लेख छन् । र ऊ जस्तो कोही पनि हुनसक्दैन यस आस्थामा दृढ भई अल्लाहको गुणगान गर्छन् । अल्लाहको फर्मान छ :

अर्थ : ऊ आकाशहरू र धरतीको स्रष्टा हो । उसले तिम्रो निम्ति तिम्रै सहजातिबाट जोडी बनायो र चौपायाहरूको जोडी पनि । यस्तै तरिकाले तिमीलाई यहाँ फैलाइ रहेको छ । ऊ जस्तो कुनै कुरा छैन, र ऊ सुन्दछ र जान्दछ । ( सूरतुश्शूरा ११ )

र मुस्लिमहरू यसमा दृढ भए कि अल्लाह नै सारा संसारको पालनकर्ता हो, र प्रत्येक सृष्टिको स्रष्टा हो । र त्यस बाहेक सबै कुराहरू त्यसका सृष्टि हुन्, र त्यसको दया र करुणाको दरिद्र छन् । अल्लाहको भनाई छ :

अर्थ : आकाशहरू र धरतीमा जो पनि छन् सबै अल्लाहका दासका रूपमा आउने वाला छन्। त्यसले तिनीहरूका आँकलन गरिसकेको छ र तिनीहरूको राम्ररी गणना गरिसकेको छ। तिनीहरू सबका सब कियामतको दिन एक्लै त्यस (रहमान) को सामु उपस्थित हुनेछन्। ( सूरतु मरियम ९३-९५ )

र आर्को सूरहमा अल्लाहको वर्णन छ :

अर्थ : हे मानिसहरू ! तिमी अल्लाहको मुखापेक्षी ( भिखारी) हौ र अल्लाह त निष्पृह, र सर्वगुणवान छ। ( सूरतु फातिर १५ )

र नबी रसूलको बारेमा मुस्लिमहरूको आस्था संतुलित नै छ। यी नबीहरूलाई तिनको अधिकार भन्दा बढी हक दिएनन् जसरी कि ईसाई यहूदी र अन्य धर्मावलम्बीहरूले दिए। यिनी सबैले सन्देष्टालाई ईश्वर नै बनाई हाले उनीहरूको आस्थाबारे अल्लाह कुरआनमा यस्तो वर्णन गरेछ :

अर्थ : यिनीहरूले अल्लाहलाई छाडी आफ्ना पादरी र सन्तहरू र मरियमको छोरा मसीहलाई आफ्ना पालनहार बनाए, जबकि यिनीहरूलाई मात्र एक एकलै अल्लाहकै उपासनाको आदेश दिइएको थियो, जस बाहेक कोही सत्य पूजनीय छैन। ऊ उसको साझेदार ठहराउने कार्यबाट मुक्त छ। ( सूरतुत्तौबः ३१ )

यस्तै यहूदीहरूले त नबीहरूका कुरै सुनेनन् बरु विमुख भई उनीहरूको हत्या गरे। अल्लाहको भनाई छ :

अर्थ : जुन मानिसहहरू अल्लाहका आयतहरू मान्दैनन् र अल्लाहका संदेशवाहकहरूलाई अनाधिकार मारिदिन्छन् र

जसले न्यायका कुरा गर्नेहरूलाई पनि मारिदिन्छन् त हे नबी तिनलाई कष्टपूर्ण सजायको सन्देश सुनाई दिनु । ( सूरतु आले इम्रान २१ )

तर यी उल्लेखित दुवै अवस्थाको बीच रही मुस्लिमहरू नबीहरूमा विश्वास पनि गरे, र उनीको अनुशरण पनि गरे, र यसको साथै उनीहरूलाई ईश्वरको दर्जा पनि दिएनन् ईश्वरलाई त्यसको अधिकार र सन्देष्टालाई सन्देष्टाको अधिकार दिई अल्लाहको उपहारको पात्र भए । अल्लाहको भनाई छ :

अर्थ : कुनै यस्तो मानिस जसलाई कि अल्लाहले किताब, तत्वज्ञान र “नबूवत” (दूतत्व) प्रदान गरेको छ यो ठिक होइन कि उसले मानिसहरूलाई भनोस् कि अल्लाहलाई छोडेर मेरो भक्त भइहाल बरु (उसले के भन्ने छ कि) तिमी सबै अल्लाहको भई हाल, यस कारण कि तिमीले उनीहरूलाई किताब सिकाउने गर्छौ र पढाउने गर्छौ । र कदापि हुन सक्दैन कि उसले फरिश्ता र पैगम्बरहरूलाई पूज्य बनाउने आदेश देओस् । के तिमी “मुसलमान” भइसकेपछि पनि उसले तिमीलाई काफिर हुन आदेश दिनेछ ? ( सूरतु आले इम्रान ७९,८० )

र यस्तै ईसा मसीहको बारेमा पनि मुस्लिमहरू संतुलित कुरा गरे, उहाँलाई ईश्वर पनि भनेनन् र अल्लाहको छोरा पनि भनेनन्, र तीन मध्ये तेस्रो पनि भनेनन् जस्तो कि ईसाईहरू भन्छन् । र उहाँको इन्कार पनि गरेनन् र मरियम ( ईसाकी आमा ) माथि त्यो ठूलो लान्छना पनि लगाएनन् जसबाट ईसा अलैहिस्सलाम व्यभिचार द्वारा जन्मिएका शिशु ठहरुन् जस्तो

कि यहूदीहरूको भनाई छ । बरु मुस्लिमहरूले भने कि ईसा अलैहिस्सलाम अल्लाहको सम्मानित भक्त एवं सन्देष्टा हुन् र अल्लाहको त्यो वाणी हुन् जसलाई अल्लाहले पवित्र चरित्रवान मरियम तर्फ पठाई दियो, र कुरआनले यस कुरालाई यसरी स्पष्ट पारेछ :

अर्थ : हे अहले किताब ! (यहूदी-ईसाई) आफ्नो धर्मको सीमा उल्लंघन नगर र अल्लाहको बारेमा सत्य बाहेक अरु केही न भन । मरियमका छोरा ईसा मसीह(अलैहिस्सलाम) (न त अल्लाह थिए न अल्लाहका छोरा बरु) अल्लाहका रसूल मात्र र उसको पवित्र सन्देशवाहक मात्र थिए, जो अल्लाहको वाणीबाट पैदा भए जसलाई अल्लाहले मरियमलाई प्रदान गरेको थियो र उसको तर्फबाट पठाईएका एउटा रूह (आत्मा) थिए, तसर्थ तिमीहरूले अल्लाह र उसका सबै रसूलहरू माथि आस्था राख र न भन कि अल्लाह तीन वटा छन् र यो धारणाबाट टाढा रह किनकि तिम्रो निम्ति यही नै राम्रो छ । अल्लाह एउटै मात्र पूजनीय छ र यो कुरासँग उसको कुनै सम्बन्ध छैन कि उसका सन्तान छन् । जे जति आकाशहरूमा र जमिनमा छन् सबै उसैको हुन् र अल्लाह नै संरक्षक स्वरूप प्रयाप्त छ । (सूरतुन् निसा १७१)

र यस्तै कुरआनले ईसा अलैहिस्सलामको प्रशंसा यसरी गरेको छ :

अर्थ : अल्लाहले भन्ने छ कि हे मरियम का पुत्र ईसा( अलैहिस्सलाम) । मेरा ती कृपाहरू यादगर, जुन तिमी र तिम्री आमा माथि गरिएको हो । जब मैले पवित्र आत्मा (जिब्रील) द्वारा तिमीलाई मद्दत पुऱ्याएँ (जसबाट) तिमी (बाल्य

अवस्थामा) आमाको गोदीबाटै र अधेड उमेरमा मानिसहरूसँग कुराकानी गर्थ्यौं र जब मैले तिमीलाई किताब र बुद्धिमत्ता र तौरात र इंजीलको तालिम दिएँ र जब तिमीले मेरो आदेशबाट माटोको चाराको रूप बनाई त्यसमा फुँकेपछि जीवित चरा बन्दथ्यो । र जब जन्मजात अन्धाहरू र कुष्टरोग सेता दाग भएका मानिसहरूलाई मेरो आदेशबाट निको पार्थ्यौ, र जब तिमी मुर्दाहरूलाई मेरो आज्ञाले (चिहानहरूबाट) निकालेर उभ्याई हाल्दथ्यौ, र जब मैले बनी इस्राईललाई तिमीमाथि अत्याचार गर्नबाट रोकिहालें, जब तिमी तिनीहरू छेउ तर्कहरूलिएर आएका थियौ फेरि तिनीहरू मध्ये जो काफिर थिए, तिनीहरूले भन्न थाले कि यो त खुल्ला जादू बाहेक अरु केही होइन । र जब मैले हवारीहरूलाई आदेश पठाएँ कि ममाथि र मेरो पैगम्बरमाथि आस्था राख । तिनीहरूले भन्न थाले कि हामीले ईमान ल्यायौं र तपाई साक्षी रहनुस् कि हामी आज्ञाकारी छौं । ( सूरतुल् माइदः ११०,१११ )

र यस्तै समस्या समाधान एवं वैध अवैधको बारेमा पनि इस्लामले बीचको मार्ग अपनाए छ। अरु धर्महरूको तूलनामा इस्लाम धर्म मध्यमार्गी धर्मको रूपमा अवतरित भयो । र यसको अनुयायीहरू यहूदी जस्तो भनेनन् कि अल्लाह त्यसलाई वैध गरुन् जसलाई हामी चाहन्छौं, र त्यसलाई अवैध गरुन् जसलाई हामी मनपराउँदैनौं । यसै संदर्भमा अल्लहको कथन छः

अर्थ : चाँडै मूर्खहरूले भन्नेछन् कि (मुसलमान) जुन किब्लासंग आबद्ध थिए, (अहिले) त्यसबाट उनीहरूलाई कुन

कुराले विमुख गराएको छ ? तपाई भनि दिनुस् कि, पूर्व र पश्चिम सबैको स्वामी अल्लाह हो । उसले जसलाई चाहन्छ, सही बाटोमा हिडने मार्ग दर्शन दिन्छ । ( सूरतुल् बकर: १४२ )

र आर्को आयतमा छ :

अर्थ : र जब तिनीहरूसित भनिन्छ कि अल्लाहले प्रदान गरेको किताब माथि आस्था राख, त भन्दछन् कि जुन ग्रन्थ हामीमाथि उतारिसकिएको छ, त्यसमाथि हाम्रो आस्था छ । जबकि त्यसभन्दा पछिल्लो (किताब) जुन कि सत्य हो र तिनको (किताब तौरातको) पुष्टि गर्दछ, त्यो संग अनास्था राख्दछन् । तिनीहरूसित यो सोध कि यदि तिमी अघिल्ला किताबहरूमाथि आस्था राख्दछौ त फेरि तिमीले अल्लाहका दूतहरूलाई किन मारिदिन्थ्यौ ? ( सूरतुल् बकर: ९१ )

र यस्तै ईसाईहरूले आफ्नो गुरु र सन्तहरूलाई ईश्वरको स्थान र दर्जा दिए बरु ईश्वर नै मान्न थाले जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : यिनीहरूले अल्लाहलाई छाडी आफ्ना पादरी र सन्तहरू र मरियमको छोरा मसीहलाई आफ्ना पालनहार बनाए, जबकि यिनीहरूलाई मात्र एक एकलै अल्लाहकै उपासनाको आदेश दिइएको थियो, जस बाहेक कोही सत्य पूजनीय छैन । ऊ उसको साझेदार ठहराउने कार्यबाट मुक्त छ । ( सूरतुत्तौब: ३१ )

तर इस्लामले कसैलाई यो अधिकार प्रदान गरेन कि अल्लाहको धर्ममा कुनै थपघट गरोस् चाहे त्यो सम्मानित नबी र सन्देष्टा किन नहोस् । र मुस्लिमहरूलाई आदेश भयो कि

यो आस्था राखुन् कि समस्त सृष्टि अल्लाहकै हो, र सृष्टिकर्ता अल्लाह नै हो, अल्लाह विरुद्ध कुनै पनि त्यसको शासनमा हस्ताक्षेप गर्न सक्दैन । र कुनै पनि मनुष्य एवं सृष्टि मध्ये कसैलाई यो अधिकार प्राप्त छैन कि त्यो उसको धर्ममा विधानमा थपघट गरोस् ।

र यस्तै मुसलमानहरू वैध अवैधबारे पनि बीचमा नै छन् । यहूदीहरू जस्तो छैनन् कि उनीहरूको उदण्डता र उत्पातको कारण उनीहरू माथि त्यो कुरो पनि अवैध गरियो जुन उनीहरू माथि वैध थियो । अल्लाहको भनाई छ :

अर्थ : तसर्थ यहुदीहरूको अत्याचारको कारणले धेरै जसो बैध (हलाल) बस्तुहरूलाई तिनीहरूको निम्ति हराम ( अवैध) बनाई दिऔं र यस कारणले पनि कि तिनीहरू धेरै मानिसहरूलाई अल्लाहको मार्गबाट रोकदैथे । ( सूरतुन् निसा १६० )

अर्थातः उनीमाथि खुर राख्ने हरेक जनावर जस्तो ऊँट, बाख्रा, पंक्षी आदि उनीहरू माथि हराम गरियो उनीहरूको उदण्डताको कारण ।

र यस्तै ईसाईहरूले आफ्नो उदण्डताको कारण सबै अवैध वस्तुलाई वैध बनाई हाले । अल्लाहको फर्मान छ :

अर्थ : र म त्यसलाई पुष्टि गर्दछु जुन मेरो अगाडि तौरात छ र यस कारणले पनि म आएको छु कि केही कुराहरू जुन कि तिम्रो निम्ति वर्जित थिए, तिनलाई ग्राह्य ( हलाल) बनाई दिउँ र म त तिम्रो पालनकर्ताको तर्फबाट तिम्रो लागि निशानी लिएर आएको छु। यसर्थ तिमी

अल्लाहसित डर मान र मैले भनेको मान। ( सूरतु आले इम्‌रान ५० )

तर इस्लाम धर्म त्यसको गौरवको लागि यति नै प्रयाप्त छ कि अल्लाहले त्यसको र त्यसको अनुशरण गर्नेहरूको विशेषता र मध्यमार्गता एवं संतुलितताको वर्णन यस प्रकार गरेको छ।

अर्थ : र हाम्रो निम्ति संसारमा पनि भलो लेखिदेऊ र आखिरत (परलोक)मा पनि, हामी तिमीतिर उन्मुख हुन्छौं। अल्लाहले भन्यो म आफ्नो यातनाले उसैलाई ग्रस्त गर्छु, जसलाई चाहन्छु तर मेरो दयालुताबाट सबैकुरा अच्छादित छन्। र त्यो दया ती मानिसहरूको नाममा अवश्य लेख्नेछु जो अल्लाहसित डरछन् र जकात(दान) दिन्छन् र जो हाम्रा आयतमाथि ईमान ल्याउँछन्। जुन मानिसहरूले यस्ता रसूल, नबी उम्मी (निरक्षर) को अनुशरण गर्छन्, जसलाई उनीहरूले आफुकहाँ तौरात र इन्जीलमा लेखिएको पाउँछन्। उनले उनीहरूलाई असल कुराको आदेश गर्दछन् र नराम्रा कुराहरूबाट मनाही गर्दछन् र स्वच्छ कुरालाई हलाल ( स्वीकार्य) बताउँछन् र अपवित्र कुरालाई हराम (वर्जित) बताउँछन् र तिनीहीरु माथिबाट त्यो बोझ उतार्दछन् जुन अहिलेसम्म उनीहरूमाथि लादिएका थिए बन्धनहरूलाई फुक्का गर्दछन् जसमा उनीहरू जकडिएका थिए। अत : जो मानिसहरू त्यस नबीमा विश्वास गर्दछन् र उनको समर्थन गर्दछन् र उनको सहायता गर्दछन्, र त्यस प्रकाशलाई मान्दछन् जो उनको साथमा पठाइएको छ। यस्ता मानिसहरू

पूर्ण सफलता प्राप्त गर्नेवाला छन् । ( सूरतुल् अअ्राफ १५६,१५७ )

र यस्तै फोहोरता र अपवित्रताको बारेमा पनि इस्लाम मध्यमार्गी छ । जस्तो कि यहूदीहरूको पूजा मात्र उनीहरूको स्थल (कनीसा)मा मान्य हुन्छ र उनीहरूको अपवित्रतालाई पानीले ( जलले ) पवित्र गर्दैन र मासिक धर्म ( राजस्वला )को अवस्थामा महिलाहरूलाई घरमा बस्न दिदैनन्, र उनीहरूको साथ खानपान गर्दैनन् । र यस्तै ईसाईहरू यहूदीहरूको विपरीत छन् , उनीहरू प्रत्येक अपवित्र र फोहोरलाई स्पर्श गर्छन् र कुनै अपवित्रलाई अवैध मान्दैनन् । अर्थात सबैलाई प्रयोगमा ल्याउँछन् ।

यी दुवै समुदायको विपरीत इस्लाम अपवित्र र फोहोरलाई अवैध र शुद्ध एवं स्वच्छलाई वैध ठान्छ, र पवित्रलाई प्रयोगमा ल्याउने र अपवित्रबाट बाँच्ने आदेश दिन्छ । जस्तो कि उपरोक्तको आयतमा वर्णन गरियो । र मुस्लिमहरूको लागि समस्त धरतीलाई पवित्र बनाइयो जस्तो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : " मलाई पाँचवटा यस्तो कुराहरू प्रदान गरिएको छ जुन म भन्दा पहिलाका सन्देष्टाहरूलाई प्राप्त थिएन, शत्रुबाट मेरो सहायता गरियो त्यसको हृदयमा हाम्रो भय हालेर, एक महिनाको जति दूरीको अवधिबाट, र समस्त पृथ्वीलाई मेरो लागि पवित्र र पूजा स्थल बनाइयो, मेरो उम्मती मध्ये जुन सुकैलाई पनि नमाजको निर्धारित समय जहाँ पनि आओस् त्यहीँ त्यो नमाज कायम गरोस्, र मेरो लागि माले गनीमत ( युद्धमा मिलेको सम्पत्ति ) वैध गरियो, र प्रत्येक सन्देष्टा मात्र आफ्नो

जातिको तर्फ पठाइयो तर मलाई सम्पूर्ण जगतको लागि सन्देष्टा बनाएर पठाइयो, र मलाई सिफारिशको अधिकार प्रदा गरियो ” । ( बुखारी , मुस्लिम )

र यस्तै ज्ञान र विद्याको बारेमा पनि मुसलमानहरू माध्यमा नै छन् । यहूदीहरू त ज्ञान त प्राप्त गर्छन् तर त्यस बमोजिम कर्म गर्दैनन्, र ईसाईहरू अज्ञानताको साथ पूजा अराधना गर्छन् । अर्थात बिना ज्ञान कर्म गर्छन्, तर मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरू यी दुवै समुदायको बीच रही कर्म गर्छन्, अर्थात ज्ञान पनि प्राप्त गर्छन् र त्यस बमोजिम कर्म पनि गर्छन्, ज्ञान र कर्मलाई एकै साथ लिएर हिंडछन् । कर्म ज्ञानविहीन र ज्ञान कर्मविहीन कसैलाई पनि फाईदा पुऱ्याउन सक्दैन, अर्थात कर्म र ज्ञान एकआर्काका पूरक हुन् । यसै कारण मुसलमानहरू सुमार्गी हुन् । अल्लहको भनाई छ :

अर्थ : हामीलाई सोझो (सच्चा) बाटो देखाऊ । उनीहरूको बाटो जसलाई तिमीले पुरस्कृत गऱ्यौ तिनीहरूको होइन जस माथि तिम्रो क्रोध भयो, र न पथ-भ्रष्टहरूको ( बाटो) । ( सूरतुल् फातिहा ६,७ )

र यसतै इस्लाम धन सम्पत्तिको बारेमा पनि सबै धर्म मध्ये उत्कृष्ट धर्म हो । जस्तो कि कतिपय धर्महरू धन प्राप्तिका सबै मार्ग खुल्ला गरिदिएका छन्, चाहे त्यो मानवताको विरुद्ध किन नहोस् । त कतिपयले त सम्पूर्ण धन एउटै मान्छेको अधिकारको अधीन गरिदिन्छन् अर्थात कुनै धर्ममा पनि सन्तुलन छैन । तर इस्लाम धर्ममा सन्तुलित विधिहरू छन् जसले गर्दा धन प्राप्ति वैध तरिकाले नै प्राप्त

गर्न सकिन्छ। यसैले गर्दा इस्लाममा व्यवसाय र परिश्रम गरी कमाई गर्ने व्यक्ति सर्वोत्तम श्रेणीमा विराजमान गरिएको छ। रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ : " त्यो मान्छे जुन बनमा गई दाउरा आफ्नो पिठ्यूमा बोकेर बजार सम्म ल्याएर विक्री गरी खान्छ, त यो कार्यबाट अल्लाह उसको अवश्यकताहरू पूर्ण गर्छ, र यो कर्म अति उत्तम छ त्यस मान्छेको लागि यस कुराको तूलनामा कि त्यो भीख माँगोस् अनि कोहीले भिक्षा दिन्छन् त कोहीले दिंदैनन् "। ( बुखारी )

र इस्लामले ती सबै मार्गहरूलाई बन्द गरिदिएको छ जसबाट कसैमाथि अन्याय होस् जसरी चोरी गर्नु, लुटपात गर्नु, सूद खानु, ....आदिलाई वर्जित गरी समाजलाई स्वच्छ र पवित्र बनाई दिएको छ। अल्लाको भनाई छ :

अर्थ : हे मोमिनहरू ! तिमीहरू आपसमा एक अर्काको सम्पत्ति अनुचित रूपमा नखाऊ। तर आपसी सहमतिले व्यापारको माध्यमबाट लेनदेनमा लाभ जायज हुन्छ, र आफूलाई आफै नमार। यसमा कुनै सन्देह छैन कि अल्लाह तिमीमाथि धेरै कृपालु छ। ( सूरतुन् निसा २९ )

यसै कारण इस्लामले दान दिने परम्परा चलायो र जकातको विधि ल्यायो, र आदेश गऱ्यो कि आफ्नो आफन्तीहरूलाई निर्बल, असहाय, अनाथ, दरिद्र ... आदिलाई दान गर।

# इस्लाम भलाईको धर्म

इस्लाम समस्त मानव जातिको भलाईलाई ध्यानमा राखी आफ्नो निर्देशनहरू निर्माण गरेको छ र यो अल्लाहको यस धर्मको अनुयायीहरू माथि दया मध्ये एक हो ।

र अल्लाह द्वारा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई इस्लाम धर्म दिई यस संसारमा पठाइयो, यो पनि समस्त सृष्टि माथि अल्लाहको उपकार र दया नै हो । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : र (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम !) हामीले तपाईलाई सम्पूर्ण जगतको निम्ति सर्वथा दयाको प्रतीक बनाएर पठाएका छौं । ( सूरतुल् अम्बिया १०७ )

इस्लाम धार्मिक, लौकिक एवं परलौकिक दृष्टिकोणले पनि सर्वथा दया नै हो, किनकि इस्लाम त्यस समय आयो जब समस्त मानवहरू अन्धकार र अज्ञानतामा जीवन व्यतीत गर्न बाध्य भइहालेका थिए । र ईसाई र यहूदीहरू हैरान भइहालेका थिए आफ्नै ग्रन्थहरूको एकआर्काको मतभिन्नतालाई हेरेर, र यो सोचेर कि आर्को सन्देष्टा किन आउँदैन, अन्तराल त लामो भयो । यसै लामो अन्तराललाई अन्त गर्दै अल्लाहले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई समस्त संसारको लागि आव्हानकर्ता एवं सन्देष्टा बनाएर पठायो । तत पश्चात मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले सबैलाई सत्यतर्फ आव्हान गरे र पुण्यको मार्ग दर्शाउनु भयो र अल्लाहको निर्देशनहरू सबैलाई सुनाउनु भयो र वैध र

अवैध स्पष्ट पार्नु भयो, यसले गर्दा इस्लाम सम्पूर्ण संसारको लागि सर्वथा दयाको प्रतीक भयो ।

र अल्लाहले वास्तवमा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई पठाई सम्पूर्ण संसार माथि उपकार र दया गऱ्यो, किनकि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम नै वास्तविक भलाई, कुकर्मबाट मुक्ति लिएर आए । र अज्ञानताकाल पश्चात ज्ञानको किरण ल्याए, र अन्धकार पश्चात पथप्रदर्शक बनी पथ प्रदर्शन गरे ।

र इस्लामको कृपाको एउटा उदाहरण यो पनि हो कि इस्लामी सिद्धान्त र निर्देशनहरू सेवकहरूको भलाई चाहन्छन् र उनीहरूको समस्याको पूर्णतः समाधान गर्छन् र उनीहरूलाई भलाईको आदेश गरी हानिकारक कुराहरूबाट उनीहरूलाई रोकेर सुरक्षित गर्छन् । र यस्तै प्रत्येक निर्देशनहरूमा लाभदायक कार्यहरूको आदेश गरिन्छ र हानिकारक क्रियाकलापबाट रोकिन्छ ।

र इस्लाम धर्मले विशेष गरी मूल ५ धारामा भक्तहरूको हित र सम्मानलाई ध्यानमा राखी त्यसको रक्षा गर्छ । धर्मको रक्षा, र ज्यानको रक्षा, र ज्ञानको रक्षा, र नस्ल ( वंशज )को रक्षा, र सम्पत्तिको रक्षा ।

र इस्लामले उपरोक्त पाँचवटा विशेष धारा माथि विशेष ध्यान दिएको छ , किनकि त्यसमा सम्पूर्ण संसार र मानवताको कल्याण नीहित छ । र यसै माथि कार्य गरी आफ्नो जीवनको वास्तविक स्वाद प्राप्त गर्न सकिन्छ, र प्रसन्नता एवं सन्तुष्टि प्राप्त गर्न सकिन्छ । र असन्तुष्टि, अविश्वासबाट मुक्ति पाइन्छ,

र समाजको उपद्रव, भ्रष्टाचार, उदण्डता, षडयन्त्र,....आदिबाट मुक्ति प्राप्त हुन्छ ।

र यस्तै ती पाँच धारालाई दृढतापूर्वक समाते पछि परलोकमा मर्णोपरान्त स्वर्गमा सुख शान्तिको भोग हुनेछ, र नर्कको दण्डबाट मुक्ति प्राप्त हुनेछ ।

र जब मनुष्य आफ्नो जीवनमा इस्लामी निर्देशनहरूलाई लागू गर्छ तब त्यसको जीवनमा समृद्धि आँउछ त्यसको आदर सत्कार हुनथाल्छ र त्यसको वर्चस्व सबैमाथि कायम हुन्छ, र त्यो आफ्नो लक्ष्यलाई प्राप्त गर्छ । र जब मनुष्य इस्लामी निर्देशनमा थपघट अथवा त्यसबाट विमुख भइहाल्छ तब त्यसको जीवनमा विनाश आँउछ र असंतुष्टि, दरिद्रता अपमान आदि त्यसको जीवनलाई नर्क बनाई दिन्छ ।

र जब हामी ती पाँच धाराहरू माथि विनम्रता पूर्वक विचार गर्छौं तब यो देखिन्छ कि इस्लामको हरेक निर्देशन यसै पाँच धारालाई सुरक्षित गर्छन् चाहे त्यो कर्म गर्ने आदेश होस्, वा कर्मबाट रुक्ने आदेश होस् । यसैले गर्दा ज्यानको रक्षाको लागि केही विधिहरू बनाएको छ त्यस मध्ये सन्तानमा बढोतरी गर्नु, बच्चाहरूको पालनपोषण गर्नु, उनीसित स्नेह गर्नु, र राम्रो भोजन गरी आफै आफ्नो स्वास्थको रक्षा गर्नु । र यस्तै यसको अर्थ यो पनि हो कि कसैको हत्या नगर्नु, आत्मा हत्या नगर्नु, निर्दोषलाई कुटपिट नगर्नु, र स्वास्थ्यलाई हानि पुऱ्याउने पदार्थको सेवन नगरी आफ्नो स्वास्थ र ज्यानलाई बचाउनु ।

र मन मस्तिष्कको रक्षाको निम्ति इस्लामले ज्ञान प्राप्त गर्नुको आदेश दिएछ, र प्रोत्साहन पनि गरेछ, र ज्ञान प्राप्तिलाई पूजाको दर्जा प्रदान गरेको छ, र अल्लाहको समीपताको साधन बनाएको छ, र विद्या प्राप्तिको समय त्यस मान्छेलाई पुण्य पनि दिइन्छ ।

र यस्तै इस्लामले यस सृष्टि माथि चिन्तन् मनन् र सोच विचार गर्ने आदेश गरेको छ । र यस चिन्तन मनन्लाई पनि पूजाको दर्जा प्राप्त छ । यस्तै आफ्नो छोरा छोरीलाई धार्मिक र संसारिक ज्ञान दिनुको पनि आदेश गरेको छ ।

र यस्तै ती सबै पदार्थको सेवन नगर्न आदेश दिएको छ जसमा कुनै प्रकारको हानिनोक्सानी छ, चाहे त्यो हानि सेवन गर्ने मान्छेलाई लागोस् वा कुनै आर्को मान्छेलाई लागोस् । यसैले गर्दा इस्लाम हरेक प्रकारको नशालु पदार्थलाई अवैध गरिदिएको छ जसबाट समाजको विगार हुन्छ ।

र वंशको रक्षाको निम्ति इस्लामले विहे गर्ने आदेश दियो, र त्यसलाई पनि पूजाको स्थान दियो र विवाह गर्नेलाई पुण्य दिने वचन दियो । र आफ्नो दृष्टिलाई आर्काको छोरी र स्वास्नी माथि नराख्ने आदेश दियो, र व्यभिचारलाई दण्डनीय अपराध ठानी समाजलाई अमानवीय क्रियाकलापबाट मुक्त गरि हाल्यो । र यस्तै वंशको रक्षाको लागि त्यो सबै क्रियाकलापबाट रोक्यो जसले गर्दा समाजमा विगार उत्पन्न हुन्छ । र कसैको इज्जतसित खेल्नेलाई महा पापी घोषित गरियो, र ती सबै क्रियाकलाप एवं गतिविधिलाई वर्जित गरियो जुन व्यभिचार सम्म पुऱ्याउँछ । जस्तो कि युवतीहरू पर्दा गरेर बाहिर निस्कुन्, पुरुष र महिलाहरू अआफ्ना

दृष्टिलाई तल राखुन्, महिलाहरू अपरिचित व्यक्तिसित मेलमिलाप नगरुन्, र आफ्नो गुप्ताङ्गको रक्षा गरुन् ... आदि ।

र धन सम्पत्ति एवं मालको रक्षाको लागि इस्लामले व्यापार एवं व्यवसायलाई वैध गऱ्यो । र खेतीपाती गर्न आदेश गऱ्यो, र जकात एवं दान गर्ने आदेश गऱ्यो जसबाट गरीब, निसहाय, दरिद्र आदि लाभान्वित हुन् सकुन् । र चोरी नगरुन्, र सबै यस्तो कार्य गरुन् जसबाट एक आर्कालाई सहायता एवं बल पुगोस्, र जसबाट सबैको लाभ होस् र जसबाट समाजको उन्नति होस् । र यस्तै दान दिनु माथि विशेष रूपले बल दिइयो किनकि त्यसबाट प्रेम र माया पनि बढछ र धनमा बढोतरी पनि हुन्छ ।

र यस्तै त्यो सबै गतिविधिलाई वर्जित गरियो जसबाट एक आर्कालाई हानि नोक्सानी पुग्छ, र जसबाट एकआर्काको धन निराधार तरिकाले खाइन्छ जसरी सूद ब्याज, चोरी, क्षलकपट, विश्वासघात ... आदि यी सबै क्रियाकलापलाई पर्जित गरी इस्लामले मानवताको पाठ पढाएछ । र यी सबै वर्णन गरिएका कुराहरूमा मात्र संसारिक लाभ छैन बरु परलौकिक लाभ पनि यसैमा नीहित छ, जस्तो कि यी कार्यहरू गरी मनुष्य आफ्नो पालनकर्ताको दयाको पात्र बन्छ, स्वर्गको पात्र बन्छ, र अल्लाहको सजाय र दण्डबाट मुक्ति प्राप्त हुन्छ । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : प्रत्येक ज्यानले मृत्युको स्वाद चाख्नु पर्ने छ र तिमीलाई कियामतको दिन तिम्रा क्रियाकलापहरूको पूरापूर प्रतिफल प्रदान गरिने छ, तसर्थ जुन मानिसलाई नर्कको

आगोबाट टाढा राखिनेछ र स्वर्गमा प्रवेश गराइनेछ, निश्चय नै उही सफल हुनेछ र संसारिक जीवन त भ्रमको सामान मात्र हो । ( सूरतु आले इम्रान १८५ )

र मनुष्यको हित अल्लाहको अनुशरण गर्नुमा नै छ जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : र जो वरदान प्राप्त हुनेछन्, तिनीहरू स्वर्गमा हुने छन् जब सम्म आकाश र पृथ्वी छन् सधैं यसैमा रहने छन्, तर जति तिम्रो पालनकर्ताको इच्छा हुन्छ । यो पुरस्कार हो जुनकि कहिल्यै समाप्त हुनेछैन । ( सूरतु हूद १०८ )

र यी कुराहरूमा परलौकिक हित नीहित छ यसको लागि यो कुरा नै प्रयाप्त छ कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो कि स्वर्ग ती मान्छेहरूको लागि तयार गरिएको छ जसले अल्लाहको अनुशरण गर्‍यो, र उहाँ भन्नुहुन्छ : “ अल्लाह भन्छः मैले आफ्नो भक्तहरूको निम्ति यस्तो स्वर्ग तयार गरेको छु जसलाई नत कुनै आँखाले हेरेछ नत कुनै कानले सुनेछ, र कुनै मनुष्यको हृदय त्यसको कल्पना पनि गर्न सक्दैन ” फेरि उहाँले भन्नु भयो यदि तिमी चाहन्छौ भने यो आयत पढ !

अर्थ : (अनि अल्लाह बाहेक) कसैलाई थाहा छैन कि उनीहरूका निम्ति उनको आँखाका शितलता लुकाएर राखिदिएका छौं यो उनीहरूका कर्महरूको पुरस्कार हो, जुन उनीहरूले गर्ने गर्दथे । ( सूरतुस्सज्दः १७ ) ( बुखारी )

र जब हामी इस्लामी निर्देशनहरूमा विचार गर्छौं तब हामीलाई यो थाहाहुन्छ कि सबै निर्देशनहरू मानवताको र सम्पूर्ण मानव जातिको लाभका लागि छन्, र लाभलाई हरेक

व्यक्ति बुझ्न सक्छ तर आफ्नो क्षमता अनुसार । साधारण मान्छे आफ्नो

समझ अनुसार र विद्वान आफ्नो बुद्धि अनुसार बुझ्छन् ।

र यस्तै कतिपय यस्ता निर्देशनहरू छन् जसलाई विद्याको माध्यमले बुझ्न सकिन्छ, यसैले ज्ञान प्राप्त गर्नु प्रत्येक मुस्लिममाथि अनिवार्य छ, किनकि ज्ञान नै त्यो सीढी हो जसको माध्यमबाट मनुष्य बुद्धिमत्ताको चुचरोमा पुग्न सक्छ ।

इस्लामी निर्देशनका हितहरू यतिछन् कि वर्णन गर्न सकिन्न तर उदाहरण स्वरूप केही तपाईहरू सामु राख्न प्रयास गरिरहे छु ! अल्लाहले आदेश गरे कि पूर्ण आस्था राख, र पूर्ण आस्था (ईमान)को ६ वटा स्तम्भहरू छन्

१- अल्लाह माथि आस्था राख्नु ।

२- त्यसका फरिश्ताहरू माथि आस्था राख्नु ।

३- त्यसका सन्देष्टाहरू माथि आस्था राख्नु ।

४- त्यसका समस्त ग्रन्थहरू माथि आस्था राख्नु ।

५- महा प्रलय माथि आस्था राख्नु ।

६- भाग्यको लाभ र हानिमाथि आस्था राख्नु कि त्यो अल्लाहकै तर्फबाट हो ।

जब हामी यस सम्पूर्ण आस्थाको हित र फाईदामा विचार गर्छौं तब यसको फाईदाहरू चरैतिर देखिन्छ । सर्वप्रथम यो आस्था सृष्टिलाई स्रष्टातर्फ प्रवृत्त गर्छ, र त्यसको प्रेमलाई सुदृढ पार्छ । र यस्तै जब भक्तलाई यो ज्ञान भयो कि अल्लाह नै सृष्टिकर्ता हो फेरि त्यही नै पूजाको

अधिकारी हो, र मात्र त्यसैको गुणगान गर्न थाल्छ। र जब यो सिद्ध भयो कि अल्लाह सित कुनै पनि वस्तु गोप्य छैन र कुनै पनि अल्लाह बाहेक हानि लाभ र फाईदाको मालिक छैन, फेरि कसैसित किन डरने, अनि भक्त मात्र अल्लाह सित डर मान्छ र उसैको कृपा चाहन्छ। अल्लाहको भनाई छ :

अर्थ : हेर, तिमी न अल्छी गर न चिन्तित होऊ। यदि तिमी ईमानवाला हौ भने तिम्रै वर्चस्व कायम हुने छ। ( सूरतु आले इम्रान १३९ )

र यस्तै भक्त अल्लाह र आफू बीच कसैलाई माध्यम बनाउँदैन किनकि त्यसलाई थाहा भयो कि अल्लाह सबै सुन्छ जान्दछ र अल्लाह सबै विन्ती गर्नेहरूको बिन्ती स्वीकार गर्छ, कसैलाई माध्यम बनाउने अवश्यकता छैन। अर्थात शिर्क बहुदेववादबाट आफूलाई बचाउँछ। रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छः रसूल सल्लल्लाहो अलैहे वसल्लमले मुआज सित भन्नु भयोः “हे मुआज के तिमीलाई थाहा छ कि अल्लाहको अधिकार भक्तहरू माथि के छ ? र भक्तहरूको अधिकार अल्लाह माथि के छ ?” मोआज रजीअल्लाहो अन्होले भन्नु भयोः अल्लाह र उसको रसूललाई अधिक जानकारी छ, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयोः “निःसंदेह अल्लाहको अधिकार भक्तहरू मथि यो छ कि उनी त्यसको पूजा गरुन् र त्यसको पूजामा कसैलाई साझीदार न ठहराउन् । र भक्तहरूको अधिकार अल्लाह माथि यो छ कि अल्लाह तिनीहरूलाई सजाय न देओस् जिनले त्यसको साथ कसैलाई साझीदार ठहराएनन्” । मुआजले भन्नु भयोः हे अल्लाहको रसूल के म यो शुभ समाचार सबैलाई न सुनाई दिऊँ। रसूल

सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: “होइन न सुनाऊ किनकि यो शुभ समाचार सुनेपछि सबै यसैमाथि भरोसा गरी कर्मलाई त्यागिदिन्छन्” । ( बुखारी, मुस्लिम )

यो हदीसबाट यो कुरा स्पष्ट हुन्छ कि जब एउटा मुस्लिम सानैबाट लाइलाहा इल्लल्लाह पढछ र त्यसको अर्थ बुझ्छ र आफ्नो जन्मिने लक्ष्य र उद्देश्य त्यसलाई थाहा हुन्छ तब त्यो आफ्नो लक्ष्य प्राप्तिको लागि इस्लामीय सिद्धान्त बमोजिम कर्म गरी आफ्नो जीवनको सुख भोग्छ । र अरु मान्छेहरू जस्तो भ्रमित हुँदैन जुनलाई यो पनि थाहा हुँदैन कि तिनीहरूको जन्म किन भएछ र यो ब्रह्माण्ड किन बनाइए छ आदि । अल्लाहको भनाई छ :

अर्थ : र अल्लाहको साथ अन्य कसैलाई पूज्य नबनाऊ । म उसको तर्फबाट तिम्रो निम्ति एउटा प्रत्यक्ष डर देखाउने वाला हूँ । ( सूरतुज् जारियात ५६ )

र यस्तै उसलाई यो थाहा हुन्छ कि मरे पश्चात एक पटक फेरि जीवन मिल्ने छ । जस्तो कि अल्लाहको फर्मान छ :

अर्थ : ती काफिरहरूले सोचे कि उनीहरू पुनः जीवित गरिने छैनन् । तपाई भनिदिनुस् कि हो, मेरो पालनकर्ताको क़सम ! तिमी अवश्य नै उठाइने छौ, अनि जुन काम तिमीले गर्दै आएका छौ, तिमीलाई बताइने छ र यो अल्लाहको लागि अत्यन्त सरल छ । ( सूरतुत्तगाबुन ७ )

र यो धर्म जब कसैको हृदयमा बसछ तब त्यसलाई समस्त संसारको संतुष्टि मिल्छ र जीवनको पूर्ण सुखको

त्यसलाई आभास हुन्छ र त्यो परम आनन्दले जीवन बिताउँछ ।

र यस्तै जब मोमिन ( आस्थावान )लाई यो थाहा भइहाल्छ कि हानि लाभ मात्र अल्लाहका हातमा छ तब आफ्नो भाग्यबाट सन्तुष्ट भइहाल्छ । अल्लहको फर्मान छः

अर्थ : जुनसुकै मुसीबत (दुःख संकट) धरतीमा आउँछ वा तिमीमाथि, त्यसलाई मैले पठाउनु भन्दा पहिला एउटा किताबमा अंकित हुन्छ । यो काम अल्लाहको निम्ति सजिलो छ । ताकि तिमीले त्यसकुराबाट अफशोच नगर जुन कि तिमीबाट गुज्रिसकेको छ, र न त्यस कुरामाथि अभिमान गर जुन उसले तिमीलाई प्रदान गरेको छ । अल्लाहलाई कुनै घमण्डी र आत्म प्रशंशकहरू मन पराउँदैनन् । ( सूरतुल् हदीद २२,२३ )

फेरि त्यसलाई कुनै हानि पुग्छ भने त्यो व्याकुल हुदैन बरु अल्लाहको फैसला ठानी त्यसैतर्फ लाग्छ, र कुनै लाभ भयो भने अल्लाह कै कृतज्ञता प्रकट गर्छ । जस्तो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले यो धर्मको विशालता दर्शाउदै भन्नु भयोः " मोमिनको अवस्था आश्चर्यजनक छ त्यसको प्रत्येक अवस्था र समस्या त्यसको लागि लाभदायक छन्, र यो उत्कृष्टता मात्र आस्थावानहरूको लागि छ । यदि त्यसलाई कुनै लाभ पुग्छ भने त्यो आफ्नो पालनकर्ताको आभार प्रकट गर्छ अर्थात कृतज्ञता प्रकट गर्छ, र यदि त्यसलाई कुनै हानि पुग्छ भने त्यसमाथि संतोष गर्छ अर्थात सहनशीलताको परिचय दिन्छ, र यी दुवै अवस्था त्यसको लागि लाभदायक हुन्छ " । ( मुस्लिम )

र यसै कारण इस्लामी अनुयायीहरूको उत्कृष्ट विशेषता मध्ये कृतज्ञता र सहनशीलता पनि हो जुनसुकै अवस्थामा अल्लाहको कृतज्ञता प्रकट गर्छन् र संयमको डोरीलाई समातेर कर्म गर्दै जान्छन्, र अल्लाह उनीमाथि आफ्नो अनुग्रह फराकीलो गर्दै जान्छन् । अल्लाहको भनाई छः

अर्थ : र, हामीले कुनै न कुनै तरिकाबाट शत्रुको त्रास, भोकबाट, धन-सम्पत्ति, ज्यान र फलहरूको कमीबाट तिम्रो परीक्षा गर्नेछौं, (तसर्थ) धैर्य गर्नेहरूलाई शुभ सन्देश सुनाई दिनु । यिनीहरूलाई जब कुनै आपत-विपत्ति आउँछ त भन्दछन् कि हामी अल्लाहकै अधीनमा हौं र हामी उसैतिर फर्केर जानेवाला छौं । यिनीहरू माथि नै उनको पालनकर्ताको कृपा र उपकारहरू छन् र यिनै सत्य बाटोमा छन् । ( सूरतुल् बकरः १५५-१५७ )

र यसै आस्थाको माध्यमले मानिस संसारिक जीवनको वास्तविक आनन्दको भोग गर्छ, तत पश्चात आफ्नो सम्पूर्ण जीवन अल्लाहको स्तुति र गुणगानमा व्यतीत गर्छ अनि ईमानको वास्तविक मिठास पाँउछ । जस्तो कि हजरत अनसले रिवायत गरेको हदीसमा छ कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयोः " जसमा यी तीन गुण हुन्छन् त्यो ईमानको मिठास पाउनेछ, जसलाई अल्लाह र अल्लाहका रसूल सबै भन्दा प्रिय हुन्छन्, र जुन मानिस अल्लाहको लागि प्रेम गरोस्, र जुन मान्छे इस्लामबाट बिमुख हुनुलाई यस्तै घृण गरोस् जसरी आगोमा हालिनेलाई गर्छ " । ( बुखारी )

र यस्तै आस्था राख्नेहरू वास्तवमा ईमानको मिठास पाउँछन् र लोक परलोकको सम्मानजनक पदमा विराजमान

हुन्छन् । रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : " त्यो मान्छेले ईमानको मिठास प्राप्त गऱ्यो जसले अल्लाहलाई आफ्नो पालनकर्ता स्वीकार गऱ्यो, र इस्लामलाई आफ्नो धर्म स्वीकार गऱ्यो, र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई आफ्नो सन्देष्टा स्वीकार गऱ्यो " । ( मुस्लिम )

र इस्लामको पाँच स्तम्भहरू एकेश्वरवाद मन्त्र ( कलमतुत्तैयिक ) पश्चात ( अर्थात यो आस्था पश्चात कि अल्लाह बाहेक अरु कोई पूजनीय छैन ) दोस्रो मुख्य मंत्र हो , यो कुरामाथि आस्था राख्नु कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम अल्लाह द्वारा पठाइएका सन्देष्टा हुन् । र उहाँलाई अल्लाहले रोजेर हाम्रो हितको लागि अल्लाहतर्फ पथप्रदर्शक बनाएर पठायो । यसमा सम्पूर्ण संसारको हित नीहित छ , र सबैमाथि अल्लाहको परमदया र कृपा छ , जसले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई समस्त संसारको लागि सर्वथा दया बनाएर पठायो । उहाँ सल्लल्लाहो अलैहे वसल्लम सबैलाई अन्धयारोबाट निष्कासित गरी उज्यालोतर्फ लगाउँछन्, र बहुदववादबाट एकेश्वरवाद तर्फ बोलाउँछन्, र आफू जस्तो मानवको अराधनाबाट संसारको पालनकर्ताको पूजातर्फ बोलाउँछन् ।

र दोस्रो स्तम्भ हो नमाज ( विशेष क्रियाकलापको माध्यमले अल्लाहको पूजा अराधना गर्नु (अनुवादक) ) जुन वास्तवमा अल्लाह र भक्तको बीच वास्तविक सम्बन्ध हो । जब भक्त आफ्नो पालनकर्ता समक्ष भयत्रास एवं आशाको साथ उभिन्छ यस अवस्थामा कि त्यो भक्त वजू गरी पवित्र हुन्छ, र त्यसको लुगा पनि पवित्र हुन्छ, र त्यो स्थल पनि

पवित्र हुन्छ जहाँ त्यो उभेको छ, र संसारिक लोभ लाल्साबाट मुक्त हुन्छ । यो सबै यस कारण कि त्यो आफ्नो पालनकर्तालाई ढोग्ने इच्छुक छ र त्यसको दया पाउन आशान्वित छ । फेरि त्यो नमाजको माध्यमले आफ्नो पालनकर्ता सित निर्मल स्वरमा कुरागर्छ ।

र जब हामी नमाजको क्रियाकलाप माथि विचार गर्छौं तब थाहा हुन्छ कि ती सबै क्रियाकलापमा विशाल हितकर कुराहरू नीहित छन् । र प्रत्येक मनुष्यलाई आफ्नो पालनकर्ता सित संपर्क गर्ने इच्छा हुन्छ, र अवश्यकता पनि । र मुस्लिमहरू आफ्नो पालनकर्तासंग नमाजको माध्यमबाट संपर्क गर्छन् किनकि मनुष्यको जीवन यो संपर्क बिना नर्क जस्तो हुदैजान्छ, आत्मिक असंतुष्टि हुन्छ, र जब मुस्लिमहरू हरेक नमाजमा सूरः अल्फातिहा पढछन् जुन सूरः कुरआनको सर्वश्रेष्ठ सूरः मध्ये एक हो, जसमा भक्त आफ्नो पालनकर्ताबाट यो विन्ती गर्छ कि हे अल्लाह मलाई आफ्नो सुमार्गमा लगाऊ र पथ भ्रमितहरूको मार्गबाट बचाऊ । र अल्लाहको विशेषताको माध्यमबाट अल्लाहको अराधना गर्छ र आफ्नो परलोकको जीवनलाई यादगरी त्यसको तयारी गर्छ ।

र नमाजसित मान्छे शैतानको उकसाहट (कौतुहलता)बाट मुक्ति पाउँछ र शैतान माथि वर्चस्व प्राप्त गर्छ, र सबै अमानवीय कार्यबाट मुक्ति प्राप्त गर्छ । र यस्तै नमाजबाट आफू माथि विश्वास गर्न क्षमता प्राप्त गर्छ र शक्ति एवं भक्ति प्राप्त गर्छ ।

र यस्तै नमाजले निर्धारित समयमा काम गर्ने बानी सिकाउँछ जसले गर्दा समयमा वृद्धि भए जस्तो लाग्छ । र

यस्तै सामूहिक नमाज मनुष्यलाई प्रेमको पाठ पढाउँछ जुन नमाजमा अमीर (समृद्ध) दरिद्र, राजा रंक, ठूलो सानो, विद्वान निरक्षर, अरबी नेपाली, हिन्दी अफरीकी आदि एउटै पंक्तिमा अल्लाहको सामु उभिन्छन् । र एकै चोटि र एउटै समय आमीन भन्छन् । फेरि यो आभास गर्छन् कि हामी सबैजना भाइ भाइ हौं । यो प्रेमभाव कुनै धर्ममा देखिन्न ।

र यस्तै नमाज हृदयलाई संतुष्टि प्रदान गर्छ र संसारिक हैरानीबाट मुक्ति प्रदान गर्छ । र अल्लाहले कुनै पनि आपत्ति आएमा नमाज कायम गर्ने आदेश दिएका छन् । अल्लाहको भनाई छ :

अर्थ : हे आस्थावानहरू, धैर्य र नमाजसित मद्दतको आशा गर्नु । (निःसन्देह) अल्लाह धैर्यवानहरूको साथ दिन्छ । ( सूरतुल् बकरः १५३ )

र नमाज इस्लामको सबै भन्दा बलियो स्तम्भ हो । र नमाज सबै कष्टलाई नष्ट गरिदिन्छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयोः “ जब तिमी मध्ये कोही आफ्नो नमाजमा हुन्छ तब त्यो आफ्नो पालनकर्तासित मीठो स्वरमा कुरा गरिरहेको हुन्छ ” । ( बुखारी )

र यस्तै नमाज परिश्रम गर्न सिकाउँछ, र सहनशीलता सिकाउँछ । र नमाज नै पापहरूलाई नष्ट गर्छ र भक्तको श्रेणी बढाउँछ, र पुण्यमा बढोतरी गर्छ । र नमाज आत्माको सहायता गर्छ, र सत्यतर्फ लगाउँछ । र नमाज नै ईमानको आत्मिक भोजन हो, र नमाजबाट नै ईमान सुदृढ भइहाल्छ । र नमाज नै त्यो हतियार हो जसबाट मान्छे समस्त बुराईहरूबाट लडछ । जस्तो कि अल्लाहको फर्मान छ :

अर्थ : (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम ) त्यस किताबलाई पढ्ने गर्नुस्, जुन तपाईंलाई “वह्य” द्वारा पठाइएको छ, र नमाज कायम गर्नुस् । निःसन्देह नमाजले अश्लीलता र नराम्रो कुराबाट रोक्दछ । र अवश्य अल्लाहको स्मरण गर्नु त अत्यन्त ठूलो कुरो हो । तिमी जे गर्दैछौ अल्लाह जान्दछ । ( सूरतुल् अन्कबूत ४५ )

र नमाज औसधि र उपचार हो सबै बिरामीको चाहे त्यो शारीरिक रोग होस् अथवा आत्मिक रोग, सबैबाट निको पार्छ । अल्लाहको कथन छ :

अर्थ : निःसन्देह मानिस काँचो मुटुवाला बनाइएको छ । जब उसलाई कष्ट पुग्छ त आत्तिन्छ, तर जब उसलाई राहत (सम्पन्नता) प्राप्त हुन्छ त उसले कन्जूसी देखाउँछ, तर नमाज पढ्नेहरूको कुरा अर्कै छ । जसले नमाज नियमित्ताका साथ पढ्दछन् । ( सूरतुल् मआरिज १९-२३ )

र नमाजमा साइन्टिफिक फाईदाहरू पनि छन् जसरी शरीरको व्यायाम .... आदि ।

र जसले जकात माथि विचार गर्छ जुन कि इस्लामिक सिद्धान्त अनुसार अल्लाहको कृपा पाउनको लागि समृद्धहरू माथि अनिवार्य छ कि गरीबहरू मथि दान गरुन् । र इस्लाममा यसका विधिहरू छन् कसरी दिनु छ र कति दिनु छ ... आदि । यो त्यसको विवरणको ठाउँ होइन बरु हामी त्यसको फाईदाहरू तर्फ लागौं । त्यसको फाईदाहरू मध्ये यो पनि हो कि हामी अल्लाह र त्यसका रसूलको अनुशरण गरिरहे छौं, र त्यसबाट समृद्ध र दरिद्र बीच मायाप्रेमको वृद्धि हुन्छ, र

समृद्ध एवं दरिद्र बीच जुन एउटा धर्को एवं खाल्टो छ त्यसलाई समाप्त गर्छ ।

र जकात दिनु यस कुरामाथि प्रमाण हो कि दान गर्ने मान्छे अल्लाह माथि आस्था राख्छ, जस्तो कि हदीसमा छ : " र दान प्रमाण हो "। अर्थात ईमानको प्रमाण हो । ( मुस्लिम )

र जकात दिनु अल्लाहले प्रदान गरेको अनुग्रहको कृतज्ञता प्रकट गर्नु हो, र आफ्नो धनमा बढोतरी गर्नु हो , र आफ्नो सम्पत्तिलाई कुनै पनि बिपत्ति एवं संकटबाट सुरक्षित गर्नु हो । र यस्तै जकात दिनुमा आफूलाई राम्रो आचरणको मान्छे प्रमाणित गर्नु हो, र सदाचारीहरूको गुण आफू भित्र उत्पन्न गर्नु हो । अल्लाहको फर्मान छ :

अर्थ : तिनीहरूको सम्पत्तिबाट तपाईंले सदका (दान) लिनुस् जसबाट तिनीहरूलाई तपाईंले शुद्ध र पवित्र गरिदिनुस् र तिनीहरूका लागि प्रार्थना गर्नुस्, निःसन्देह तपाईंका प्रार्थना तिनीहरूको सन्तुष्टिको श्रोत हो र अल्लाह धेरै सुन्नेवाला र जान्नेवाला छ । ( सूरतुत्तौबः १०३ )

र यो दान (धर्मादय- जकात) ईर्ष्या, अभिमान, कुकर्म..... आदिलाई मेटाई स्नेह, प्रेम, मोह, माया .... आदिलाई हृदयमा बसाल्छ । फेरि सबैलाई दानी मान्छे माया गर्छ र सबै दानी मान्छेलाई माया गर्छन् । अल्लाहको फर्मान छ :

अर्थ : अल्लाहको मार्गमा खर्च गर र आफैले आफूलाई विनाशमा न पार र सत्कर्म गर निःसन्देह अल्लाह भलाई गर्नेहरूलाई माया गर्दछ । ( सूरतुल् बकरः १९५ )

र सावधान ! जकात ( दान ) दिएमा कसैको धनमा कमी हुँदैन बरु बढोतरी हुन्छ । रसूल सल्लल्लाहो अलैहे वसल्ल्मको फर्मान छ : " दान धनमा कमी गर्दैन " । ( मुस्लिम )

बरु अल्लाहले यो वचन दिएको छ कि जसले जकात दिन्छ म त्यसको धनमा झन् बढोतरी गर्छु । अल्लाहको फर्मान छ :

अर्थ : भनिदिनुस् कि "मेरो पालनकर्ता आफ्ना सेवकहरू मध्ये जसको निम्ति चाहन्छ, जीविका फराकिलो गर्दछ र जसको लागि चाहन्छ संकुचित गरिदिन्छ । र जेजति तिमीले अल्लाहको बाटोमा खर्च गर्‍यौ, त्यसको सट्टा तिमीलाई पूरा पूरा प्रतिफल दिनेछ । र ऊ सबै भन्दा राम्रो जीविका दिनेवाला हो" । (सूरतु सबा ३९ )

र जकात आर्थिक एवं सामाजिक स्थितिलाई सुधार छ, किनकि यदि प्रत्येक समाजमा त्यस समाजको असहाय, टुहुरो, अनाथहरूलाई जकातको धन दिइयोस् भने त्यस समाजमा चोरी, बलजफती, व्यभिचार ... आदि नष्ट भइजान्छ, र त्यो समाज सुख शान्तिले रमाउँछ ।

रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " कंजूसीबाट बच किनकि तिमी भन्दा पहिलाका मान्छेहरू यसैको कारण बर्बाद भए, उनीहरूलाई यस कंजूसीले यस कुरामाथि उत्तेजित गर्‍यो कि उनीहरूले आफ्नै आफ्नो रक्तपात गरे, र वर्जित कुराहरूलाई हलाल गरे " । ( मुस्लिम )

र व्रत ( उपवास ) जसलाई अल्लाहले हामीमाथि अनिवार्य गरेको छ । रमजानको महिनामा प्रातःकाल देखि खानु पिउनु र सबै अवैध गतिविधिहरूलाई छाडिदिनु र सूर्य अस्त सम्म व्रत अवस्थामा जे पनि अवैध छ ती सबैलाई छाडेर आफ्नो व्रतलाई पूरा गर्नु । यसमा भक्तहरूको लागि अनेकौं फाईदाहरू छन् । र व्रतले मानव निष्ठावानहरूको श्रेणीमा विराजमान भइहाल्छ। जस्तो कि अल्लाहको भनाई छः

अर्थ : आस्थावानहरू हो ! (मोमिनहरू) तिमीलाई रोजा राख्नु अनिवार्य गरिएको छ जसरी तिमीभन्दा पहिलेका मानिसहरूलाई अनिवार्य गरिएको थियो । जसबाट कि तिमी संयमी बन्न सक । ( सूरतल् बकरः १८३ )

जब मान्छे अल्लाहको कृपा पाउनको लागि मात्र आफ्नो हरेक सुख शान्ति र भोजन र हरेक अवैध क्रियाकलापलाई छाडिदिन्छ तब त्यो निःसंदेह निष्ठावानहरू मध्येको भइहाल्छ ।

र व्रतबाट असहायहरूको अवस्था पनि बुझ्न सहायता मिल्छ र यो आभास हुन्छ कि कसरी दरिद्रहरू आफ्नो जीवन व्यतीत गर्छन्, अनि समृद्धहरूको हृदयमा दया बस्छ अनि असहायहरूको सहायता गर्छन् र यो व्रतको फाईदा मध्ये एक हो ।

र यस्तै व्रतबाट मान्छेलाई यो पनि आभास हुन्छ कि हामी सबै मुस्लिमहरू एउटै समूह हौं, फेरि समाजमा एकताको वातावरण बन्छ। र यस्तै व्रतबाट आफ्नो हवसलाई मार्ने शैली एवं गुण प्राप्त हुन्छ, र बुराई ( कुकर्म )बाट बाँच्ने शक्ति प्राप्त हुन्छ। र यस्तै समृद्धलाई अल्लाहको अनुग्रह जुन

अल्लाहले उसमाथि गरेको छ त्यस अनुग्रहको महत्व थाहा हुन्छ ।

र यस्तै व्रत संयम अथवा सहनशीलताको पाठ पढाउँछ, र आफ्नो लक्ष्यमा सुदृढ रहनु पनि सिकाउँछ, र जीवनको प्रत्येक परिस्थितिको दृढता पूर्वक सामना गर्नु सिकाउँछ ।

र यस्तै उपवास राख्नु पूर्ण ईमानको निशानी (लक्षण) पनि हो, किनकि त्यसमा मान्छे आफ्नो इच्छा परित्याग गरी अल्लाहको इच्छा अनुसार भोक तिर्खाको सहन गर्छ मात्र अल्लहको दया पाउनको लागि ।

र यस्तै व्रत औषधि हो त्यस मान्छेको लागि जसलाई विवाह गर्ने क्षमता छैन । हदीसमा वर्णन छ कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: “ हे युवकहरूको समूह तिमी मध्ये जसमा विहेगर्ने क्षमता एवं इच्छा छ भने त्यो विहे गरिहालोस्, किनकि यो दृष्टिलाई तल राख्छ र गुप्ताङ्गको रक्षा गर्छ, र जसलाई विहेगर्ने क्षमता छैन त्यो व्रत बसोस् किनकि यो त्यसको लागि कवच हो ” । ( बुखारी )

र यस्तै यो व्रत मानवजातिलाई जनावरबाट भिन्न गर्छ । र यो व्रत मानवमा अभिमानबाट बाँच्ने बानी बसाल्छ, र प्रेम स्नेह सरलताको बानी बसाल्छ । र यस्तै व्रत बसेमा मान्छे हिष्टपुष्ट पनि हुदैजान्छ किनकि जसरी हामीलाई विश्राम चाहिन्छ उस्तै हाम्रो पाचन शक्तिलाई पनि विश्राम चाहिन्छ र व्रत बसेमा हाम्रो पाचक शक्ति विश्राम पाउँछ, यसै कारण हाम्रो शरीर स्वस्थ भइहाल्छ । र यस्तै व्रत हामीलाई समयको पाबन्द ( अनुशाशित ) बनाउँछ । जसरी अल्लाहको कथन छ :

अर्थ : रोजाको रात्रीमा तिमीलाई आफ्नो स्वास्नीसित सहवासको अनुमति दिइएको छ । तिनीहरू तिम्रा बस्त्र हुन् र तिमीहरू उनका बस्त्र हौ । अल्लाहलाई त्यस कुराको जानकारी छ जुन कि तिमीहरूले गोप्य रूपले गर्दथ्यौ । ( तसर्थ) उसले तिमीमाथि कृपा गरी तिम्रो क्षमायाचना स्वीकार गरी तिम्रो क्रियाकलापहरूलाई क्षमा गरिदियो अब तिमीलाई सहवासगर्ने र अल्लाहले जे निर्धारित गरेको छ त्यस चीजको खोजी गर्ने इजाजत छ । तिमीले तब सम्म खान पीन गर जबसम्म कि प्रातःको सेतो धर्को (रातीको) कालो धर्कोबाट स्पष्ट भई नजाओस् । फेरि व्रतबसी) साँझसम्म रोजा पूरा गर र जब तिमी मस्जिदहरूमा एतिकाफ (एकान्तमा उपासना) को लागि बसेका हुन्छौ, तब आफ्ना स्त्रीसित सहवास नगर । यी अल्लाहबाट निर्धारित गरिएका सीमा हुन्, तिनीहरू छेउ पनि नजानु । यस्तै किसिमले अल्लाह आफ्ना आयतहरू मानिसहरूलाई स्पष्ट रूपमा वर्णन गर्दछ, ताकि तिनीहरू आत्मसंयमी बनुन् । ( सूरतुल् बकरः १८७ )

र यस्तै व्रत मान्छेलाई झूठ बोल्नु, कुकर्म गर्नु, छलकपट गर्नुबाट बचाउँछ, रसूल सल्लल्लाहो अलैहे वसल्लमको कथन छ : " जुन मान्छे झुठ बोल्न छाडदैन त्यसको व्रतको अल्लाहलाई कुनै अवश्यकता छैन " । ( बुखारी )

र इस्लामको अन्तिम स्तम्भ **हज्ज** हो, अर्थात मक्का मुकर्रमा स्थित कअ्बाको जीवनमा एक पटक परिक्रमा गर्नु त्यो मान्छे माथि अनिवार्य छ जुन मान्छे आफू भित्र यसको सामर्थ्य पाउँछ । र जस मान्छेमा यसको सामर्थ्य छैन

त्यसलाई अल्लाहले क्षमा गरिदिनु भएछ अर्थात त्यसलाई कुनै पाप लाग्दैन ।

र हज्जमा विभिन्न प्रकारका फाईदाहरू छन् हज्ज गर्ने मान्छेको लागि र अरुको लागि पनि जसरी अल्लाहको फर्मान छ :

अर्थ : स्मरण गर जब हामीले इब्राहीम ( अलैअिस्सलाम)को निम्ति अल्लाहको घर (कअ्बा) ठेगाना बनायौं, यस आदेशको साथ कि मेरो दाँजोमा कसैलाई साझेदार नठहराउनु मेरो घरलाई तवाफ (परिक्रमा) गर्ने, उपासना गर्ने, नमाज पढ्ने (रुकूअ् र सिज्दा गर्नेहरू) हरूको निम्ति पवित्र राख। र मानिसहरूमा हज्जको निम्ति उद्घोषणा गरिदिनु कि तिनीहरू तिम्रो पासमा टाढा-टाढाबाट, पैदल पनि आउने छन् र दुबला पातला ऊँटहरू माथि सवार भई अनेक बाटो भएर आउँनेछन् । (तिनीहरूले) आफ्ना लाभ प्राप्त गर्न आऊन् र ती निश्चित दिनहरूमा ती चौपायाहरूमाथि अल्लाहको नाम लिऊन्, जुन पाल्तू छन् । अनि त्यसबाट स्वयम् पनि खाऊ र गरीब निमुखाहरूलाई पनि खुवाऊ । फेरि उनीहरूलाई आवश्यक छ कि आफ्ना फोहोर-मैला खतम पारुन् (कपाल इत्यादि सफा गरुन्) र आफ्ना कबोल गरेका कुराहरू (मन्नतहरू) पूरा गरुन् र अल्लाहको यस पूरातन घरको तवाफ (परिक्रमा) गरुन् । यी कुराहरूको ध्यान राख र जो कोही अल्लाहद्वारा निर्धारित मर्यादाहरूको आदर गर्दछ, यो उसको पालनकर्ता कहाँ उसैको निम्ति राम्रो हुनेछ, र तिम्रो निम्ति चौपाया पशुहरू हलाल गरिएका छन्, ती बाहेक जुन कि तिमीलाई भनिसकिएको छ ।

तसर्थ तिमीहरूले मूर्तिहरूको अपवित्रताबाट बच्नुपर्छ र झूठो कुराहरूबाट पनि बच्नुपर्छ । ( सूरतुल् हज्ज २६-३० )

हज्जको समस्त क्रियाकलाप एकेश्वरवादलाई प्रमाणित गर्छ र मात्र एक अल्लाहको पूजालाई दर्शाउछ, र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको अनुशरणको पाठ पढाउँछ । अर्थात इस्लामको मूलमन्त्र लाइलाहा इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाहको अर्थलाई दर्शाउँछ । र हज्जको सबै भन्दा महत्वपूर्ण फाईदा हो ऐकेश्वरवादलाई दर्शाउनु जस्तो कि अल्लाहको फर्मान छ :

अर्थ : स्मरण गर जब हामीले इब्राहीम ( अलैहिस्सलाम)को निम्ति अल्लाहको घर (कअ्बा) ठेगाना बनायौं, यस आदेशको साथ कि मेरो दाँजोमा कसैलाई साझेदार नठहराउनु मेरो घरलाई तवाफ (परिक्रमा) गर्ने, उपासना गर्ने नमाज पढ्ने (रुकूअ् र सिज्दा गर्नेहरू) हरूको निम्ति पवित्र राख । (सूरतुल् हज्ज २६)

यस्तै त्यसको लाभ मध्ये यो पनि हो कि मान्छे निष्ठावान भइहाल्छ, र अल्लाहको भयत्रास त्यसको हृदयमा जागृत भइहाल्छ । अल्लाहको भनाई छः

अर्थ : यो सुन्यौ अब यी कुराहरूलाई ध्यान देऊ । जुन व्यक्तिले अल्लाहका निशानीहरूको आदर र सम्मान गर्दछ, निःसन्देह ती कुराहरू उसको हृदयको धर्मपरायणता सित सम्बन्ध राख्दछन् । ( सूरतुल् हज्ज ३२ )

र यस्तै हज्जको समस्त क्रियाकलाप अल्लाहको पूजा अराधना नै हो, र यसबाट मान्छेमा पूजा अराधनाको बानी बस्छ ।

र यस्तै हज्जको सबै भन्दा उत्कृष्ट फाईदा हो ! (हाजी) हज्ज गर्ने मान्छेको सबै पाप नष्ट भइहाल्छन् , रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " जुन मान्छे यस घर ( कअ्बा ) सम्म आयो अनि गाली गलोज र अवैध कार्यबाट बच्यो, त्यो यस्तो भएर फर्कनेछ जसरी त्यो जन्मेको थियो " । अर्थात त्यसका सबै पापहरूलाई अल्लाह क्षमा गरिदिन्छ । ( मुस्लिम )

र अमर बिन आस रजीअल्लाहो अन्हो आफ्नो वृतान्त वर्णन गर्दै भन्नु हुन्छ कि म नबी सल्लल्लाहो अलैहे वसल्लम समक्ष पुगें र भनें: कि आफ्नो हात अगाडी गर्नुस् म इस्लाम स्वीकार गर्छु, रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो हात अगाडी गर्नु भयो, तर मैले आफ्नो हातलाई पछाडी फर्काएं त रसूल सल्लल्लाहो अलैहे वसल्लमले सोध्नु भयो अमर के भयो ? मैले भनें म एउटा कबोल गर्न चाहन्छु, उहाँले भन्नु भयो: के कबोल हो भन, मैले भनें : कबोल यो हो कि इस्लाम स्वीकारे पश्चात मेरो पछिल्लो पापहरू क्षमा गरियोस् । रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: के तिमीलाई थाहा छैन कि इस्लाम त्यो सबै पापलाई नष्ट गरिदिन्छ जुन इस्लाम भन्दा पहिला गरिएका हुन् , र यस्तै प्रवास पनि प्रवास भन्दा पहिलाका समस्त पापहरूलाई नष्ट पारिदिन्छ, र यस्तै हज्ज पनि  हज्ज भन्दा पहिलाका समस्त पापहरूलाई नष्ट पारिदिन्छ । ( मुस्लिम )

र हज्जमा संसारिक र परलौकिक लाभहरू छन् जसरी एक आर्कासित प्रेम, स्नेह, मेलमिलाप, सबैमा समानता चाहे त्यो मान्छे कुनै वर्गको पनि होस्, र यो समानता हरेक कुरामा

हुन्छ जसरी लुगामा समानता, पूजामा समानता, मन्त्रमा समानता, स्थलमा समानता, सम्पत्तिमा समानता ... आदि । चाहे त्यो राजा होस् अथवा प्रजा, सबैलाई त्यही लुगा लगाउनु पर्छ जुन दरिद्र अथवा प्रजाले लगाएको छ, र त्यही ठाउँमा बस्नु पर्छ जुन ठाउँमा दरिद्र बसेको छ, र त्यही पूजा गर्नुपर्छ र त्यसै समय गर्नुपर्छ जुन समय सबै गरिरहेका हुनेछन्, त्यहाँ केही भेदभाव गर्न सक्दैन । अर्थात हज्ज समानताको अनोठो उदाहरण हो ।

र यस्तै हज्जमा व्यवसायिक र आर्थिक लाभ पनि छन् । अर्थात हाजी हज्ज गर्ने क्रममा व्यवसाय पनि गर्न सक्छ, र खरीद बिक्री पनि गर्न सक्छ । अल्लाहको फर्मान छ :

अर्थ : तिमीमाथि (हजका दिनहरूमा व्यापारको माध्यमबाट) आफ्नो जीविका प्राप्त गर्नमा केही पाप छैन । जब तिमीहरू अरफातबाट फर्कन्छौ, तब "मश्अरुल हराममा" (मुजदलेफामा) अल्लाहलाई स्मरण गर, र उसको स्मरण त्यसरी गर जसरी उसले तिमीहरूलाई आदेश गरेको छ यद्यपि यसभन्दा अगाडि तिमीहरू बाटो विराएका थियौ । ( सूरतुल् बकरः १९८ )

र यस्तै हज्ज हज्जयात्रीलाई सहनशीलता, स्नेह, प्रेम... आदि सिकाउँछ, र राम्रो व्यवहार र राम्रो कुरा गर्ने शैली बताउँछ, र एकआर्कासंग कसरी बस्ने कसरी खाने कसरी स्वागत गर्ने .... आदि सिकाउँछ ।

# इस्लाम सरलता स्वतन्त्रा एवं क्षमाको धर्म

इस्लामको उत्कृष्ट विशेषताहरू मध्ये सरलता र क्षमाशील हुनु पनि हो । जस्तो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : “ यो धर्म सुविधा र सरलताको धर्म हो ” । ( बुखारी )

र आर्को ठाउँमा रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : “ मलाई क्षमाशील धर्म इस्लामलाई दिएर पठाइएको छ ” । ( जामेउल् अहादीस )

र क्षमा एवं सरलता र सुविधा इस्लामको प्रत्येक निर्देशनबाट प्रकट हुन्छ, बरु क्षमा र सरलता इस्लामका विशेष गुण हुन् । र यो इस्लाम कठोर परिश्रम, क्षमता भन्दा अधिक कार्य गर्ने आदेश दिदैन बरु आफ्नो क्षमता र शक्ति अनुसार कर्म गर्ने आदेश दिन्छ । र जुन मान्छे गर्न सक्दैन चाहे त्यो अनिवार्य किन नहोस् त्यसलाई त्यस मान्छेको लागि क्षमा गरिदिन्छ । अर्थात त्यसलाई छाडेमा केही पाप दोष लाग्दैन । अल्लाहको भनाई छ :

अर्थ : अल्लाहले कसैलाई उसको शक्ति भन्दा बढी कष्ट दिदैन । जुन नेकीको काम उसले गर्दछ त्यसको प्रतिफल पाउँछ र जो पाप कर्म गर्दछ त्यसको परिणाम भोग्ने छ । हे हाम्रा रब ! यदि हामीबाट कुनै भूल वा त्रुटि भएको भए हामीलाई दोषी न ठहराउनु । हे पालनकर्ता ! हामीमाथि त्यस्तो भार नराख्नु जस्तो कि तिमीले हामीभन्दा अगाडिका मानिसहरू माथि राखेका थियौ । हे हाम्रा रब ! जुन भार

बोक्न सक्ने क्षमता हामीमा छैन त्यस्तो भारी हामीमाथि नराख्नु र (हे हाम्रा रब !) हाम्रो भूलत्रुटिको निम्ति हामीलाई क्षमा गर र मुक्ति प्रदान गर र हामीमाथि दया गर, तिमी नै हाम्रो स्वामी हौ र हामीलाई काफिरहरूमाथि विजय प्रदान गर । ( सूरतुल् बकर: २८६ )

र आर्को ठाउँमा अल्लाहको भनाई छ :

अर्थ : जुन मानिसहरूले हाम्रो आयतहरूमाथी आस्था राखे र सत्कर्म गरेका छन् त्यस विषयमा हामीले कुनै व्यक्तिलाई उसको क्षमता भन्दा बढी जिम्मेवारी दिने छैनौं । यस्ता मानिसहरू नै स्वर्गका निवासी हुन् । जो सधैं त्यसमा बास गर्नेछन् । ( सूरतुल् अअ्राफ ४२ )

र आर्को ठाउँमा अल्लाहको भनाई छ :

अर्थ : सामर्थ्यवानले आफ्नो क्षमता अनुसार खर्च गर्नुपर्छ र जसको जीविकामा कमी छ उसलाई चाहिन्छ कि जति अल्लाहले उसलाई प्रदान गरेको छ, त्यस अनुसार खर्च गरोस् । जे-जति प्रदान गरेको छ त्यसभन्दा बढि अल्लाहले कुनै व्यक्तिमाथि जिम्मेवारीको बोझ राख्दैन । शीघ्र नै अल्लाहले कठिनाई पश्चात सुगमताको सृष्टि गरिदिनेछ । ( सूरतुत् तलाक ७ )

र यस कुराको आधारमा कि अल्लाह त्यस कुराको आदेश गर्दैन जसको भक्तलाई शक्ति नै छैन इस्लामका धेरै निर्देशनहरू बनाइएका छन् जसरी निद्रा, पागलपन, असावधान, बेबश ( बाध्य ) .. आदि । यस्ता विशेष अवस्थाहरूमा मान्छे माथि केही अनिवार्य हुँदैन । र अल्लाह यस्ता सबै अवस्थाहरूबारे सोधपूछ गर्दैनन्, र यो अल्लाहको

पूर्ण संसारमाथि दया नै हो जसले गर्दा अल्लाहले त्यो कार्य गर्ने अनिवनर्य गऱ्यो जुन हामी गर्न सक्छौं । र यदि हामी कुनै कार्यलाई पूर्णत: गर्न सक्दैनौं तर अधिकतर वा त्यसको केही भागलाई गर्न सक्छौं भने जुन गर्न सक्छौं त्यही हामी माथि अनिवार्य छ बाँकी हाम्रो लागि माफ छ । जस्तो कि अल्लाहको भनाई छ :

अर्थ : अल्लाहले कसैलाई उसको शक्तिभन्दा बढी कष्ट दिदैन । जुन नेकीको काम उसले गर्दछ त्यसको प्रतिफल पाउँछ र जो पाप गर्दछ त्यसको परिणाम भोग्ने छ । हे हाम्रा रब ! यदि हामीबाट कुनै भूल वा त्रुटि भएको भए हामीलाई दोषी न ठहराउनु । हे पालनकर्ता ! हामीमाथि त्यस्तो भारी नराख्नु जस्तो कि तिमीले हामी भन्दा अगाडिका मानिसहरू माथि राखेका थियौ । हे हाम्रा रब ! जुन भारी बोक्न सक्ने क्षमता हामीमा छैन त्यस्तो भारी हामीमाथि नराख्नु र (हे हाम्रा रब !) हाम्रा भूलत्रुटिको निमित्त हामीलाई क्षमा गर र मुक्ति प्रदान गर र हामीमाथि दया गर, तिमी नै हाम्रो स्वामी हो र हामीलाई काफिरहरूमाथि विजय प्रदान गर । ( सूरतुल् बकर: २८६ )

किनकि हरेक  मनुष्यको क्षमता र शक्ति भिन्न हुन्छ र त्यसको वास्तविक क्षमता वास्तवमा त्यसै मान्छेलाई नै थाहा हुन्छ र अल्लाहलाई । हामी कसैलाई यो भन्न सक्दैनौं कि तिम्रो शक्ति यति छ , अनि भनम् कि अतीक यो गर्न सक्छ तर अहमद यो गर्न सक्दैन किनकि दुवैको कार्यशैली भिन्न हुन्छ र दुवैको शक्ति भिन्न हुन्छ । यसैले अल्लाहले क्षमता र कार्यशैली जसलाई जति प्रदान गरेछ त्यसै अनुसार हिसाब

पनि लिन्छ । बरु अल्लाहले त आफ्नो करुणाले त्यो कार्यको पनि आदेश गरेन जुन हामी गर्न सक्छौं जसरी हामी २४ घण्टामा ५ बखतको नमाज पढछौं तर ६ वा ७ बखतको नमाज पनि पढने क्षमता हामीमा छ तर अल्लाहले हाम्रो सरलताको लागि ५ बखत मात्र अनिवार्य गऱ्यो, जसले गर्दा भक्तलाई कुनै कष्ट नहोस् । र यस्तै इस्लामका अरु निर्देशनहरू पनि छन् जसरी रोजा , जकात... आदि ।

यस विपरीत अल्लाहले हामी भन्दा अघिल्लो उम्मतीहरू माथि कष्टदायक कार्यहरू पनि अनिवार्य गरेको थियो जस्तो कि यहूदीहरू माथि । तर हामीमाथि अल्लाहले दया गऱ्यो अनि सबै कष्टदायक कर्मबाट हामीलाई मुक्ति प्रदान गऱ्यो । अल्लाहको फर्मान छ :

अर्थ : जुन मानिसहरूले यस्ता रसूल, नबी उम्मी ( निरक्षर) को अनुशरण गर्छन्, जसलाई उनीहरूले आफुकहाँ तौरात र इन्जीलमा लेखिएको पाउँछन् । उनले उनीहरूलाई असल कुराको आदेश गर्दछन् र नराम्रा कुराहरूबाट मनाही गर्दछन् र स्वच्छ कुरालाई हलाल (स्वीकार्य) बताउँछन् र अपवित्र कुरालाई हराम (वर्जित) बताउँछन् र तिनीहीरु माथिबाट त्यो बोझ उतार्दछन् जुन अहिलेसम्म उनीहरू माथि लादिएका थिए बन्धनहरूलाई फुक्का गर्दछन् जसमा उनीहरू जकडिएका थिए । अत : जो मानिसहरू त्यस नबीमा विश्वास गर्दछन् र उनको समर्थन गर्दछन् र उनको सहायता गर्दछन्, र त्यस प्रकाशलाई मान्दछन् जो उनको साथमा पठाइएको छ । यस्ता मानिसहरू पूर्ण सफलता प्राप्त गर्नेवाला छन् । ( सूरतुल् अअ्राफ १५७ )

र मोमिनहरूको विन्तीलाई सराहदै अल्लाहले यस्तो वर्णन गरेको छ :

अर्थ : अल्लाहले कसैलाई उसको शक्तिभन्दा बढी कष्ट दिदैन। जुन नेकीको काम उसले गर्दछ त्यसको प्रतिफल पाउँछ र जो पाप गर्दछ त्यसको परिणाम भोग्ने छ। हे हाम्रा रब ! यदि हामीबाट कुनै भूल वा त्रुटि भएको भए हामीलाई दोषी न ठहराउनु। हे पालनकर्ता ! हामीमाथि त्यस्तो भारी नराख्नु जस्तो कि तिमीले हामी भन्दा अगाडिका मानिसहरू माथि राखेका थियौ। हे हाम्रा रब ! जुन भारी बोक्न सक्ने क्षमता हामीमा छैन त्यस्तो भारी हामीमाथि नराख्नु र (हे हाम्रा रब !) हाम्रा भूलत्रुटिको निमित्त हामीलाई क्षमा गर र मुक्ति प्रदान गर र हामीमाथि दया गर, तिमी नै हाम्रो स्वामी हौ र हामीलाई काफिरहरू माथि विजय प्रदान गर। ( सूरतुल् बकर: २८६ )

फेरि अल्लाहले यसै दुआ र विन्तीको जवाफमा भन्यो: " मैले तिम्रो प्रार्थना स्वीकार गरें "। ( मुस्लिम )

र यो आयत ( श्लोक ) इसलामको विशाल निर्देशन मध्ये एक हो जसलाई आफ्नो रसूल मुहम्मदको माध्यमले हामीमाथि अवतरित गरी हामीमाथि महान उपकार गर्‍यो, किनकि बनी इस्राईल ( इस्राईलको सन्तति )लाई यो आदेश थियो कि यदि उनको लुगामा दिशा पिशाब लाग्यो भने त्यसलाई काटेर फालिदिउन् अनि मात्र त्यो लुगा पवित्र हुनेछ। तर अल्लाहको दयाले हामीलाई यो आदेश विपरीत त्यसलाई धोई पवित्र गर्ने आदेश गरियो। अर्थात हाम्रो लुगा सफा र

स्वच्छ एवं पवित्र पानीद्वारा भइहाल्छ, र पवित्र हुनुको साथ साथै त्यस लुगामा कुनै दोष पनि लाग्दैन ।

र यस्तै बनी इस्राईलको पूजा **कनीसा** र **गिर्जाघर** ( ईसई र यहूदीहरूको पूजा स्थल )मा नै पूजा मान्य हुन्थ्यो तर हाम्रो पूजा जुनसुकै स्थलमा पनि हुन्सक्छ, **मस्जिद** ( मुस्लिमहरूको पूजा स्थल ) मै पूजा स्वीकार्य हुनेछ यस्तो कुनै आदेश छैन यो अल्लाहको परम्दया होइन र ?

र यस्तै इस्लामले बृद्ध अवस्थामा, यात्रामा, भुलेमा, बिर्सेमा, बलजफती गरेमा, बाध्य भएमा विशेष स्वतन्त्रता दिएको छ, यो पनि दयाको एउटा उदाहरण हो ।

र यस्तै नमाज अनिवार्य छ, र पूरुषहरूमाथि यो पनि अनिवार्य छ कि नमाज मस्जिदमा गई कायम गरुन्, तर कुनै कारण त्यसको क्षमता एवं शक्ति छैन अर्थात कठोर परिश्रम गरी मात्र मस्जिद सम्म पुग्न सक्छ भने त्यसबाट यो अनिवार्यता निलम्बित भइहाल्छ त्यो जहाँ पनि होस् त्यहीं नै नमाज कायम गरोस् ।

र यस्तै यात्रामा एकैसाथ दुई बखतको नमाज पढने भक्तलाई स्वतन्त्रता छ तथा चार रकअतलाई दुई गरी पढने पनि पूर्ण स्वतन्त्रता छ । यो पनि अल्लाहको दयाको एउटा उदाहरण हो जुन मात्र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको उम्मतीहरूलाई प्राप्त छ ।

र यस्तै नमाज पढनुको लागि पानीबाट वजू गरेर पवित्र भई मात्र पढने आदेश छ, तर संयोगबश कसैलाई पानी मिलेन अथवा अधिक जाडो छ वा त्यो मान्छेसित यति पानी छ कि वजू गरे पश्चात खाने पानी मिल्दैन भने त्यसलाई

माटोबाट तयम्मुम गर्ने स्वतन्त्रता छ । ( तयम्मुम : वजूको विकल्प हो, तयम्मुम गर्ने तरिका यो हो कि मान्छे आफ्नो हातलाई एक पटक माटो माथि हानोस् वा स्पर्श गरोस् अनि हातलाई आफ्नो हात एवं अनुहार माथि स्पर्श गर्दै मसह गरोस् । (अनुवादक )

र यस्तै विरामी र यात्रीलाई यो स्वतन्त्रता छ कि रमजानको व्रत आर्को महिनामा बसोस् । र यस्तै शिशु प्रसव पश्चात रगतको अवस्थामा अथवा राजस्वलाको अवस्थामा आईमाईहरूलाई यो स्वतन्त्रता छ कि आफ्नो व्रतलाई आर्को दिनहरूमा बसुन् ।

र यस्तै हज्ज जीवनमा मात्र एक पटक अनिवार्य छ त्यस मान्छेको लागि जुन मान्छेसित शारीरिक र आर्थिक क्षमता होस्, र जुन मान्छेसित क्षमता छैन त्यसमाथि हज्ज अनिवार्य छैन । अल्लाहको भनाई छ :

अर्थ : यसमा स्पष्ट निशानीहरू छन्, जसमध्ये एउटा इब्राहीमको उभिने स्थल हो । यसमा जो प्रवेश गर्दछ, त्यसले अमन (शान्ति) प्राप्त गर्दछ । मानिसहरू माथि अल्लाहको हक छ कि जसले त्यस घरसम्म पुग्ने सामर्थ्य राख्दछ, त्यसले हज ( धार्मिक यात्रा) गरोस् । कसैले यदि यस आदेशको पालन गर्दैन भने अल्लाह पनि उस सित बरु संसारबाट निस्पृह छ । ( सूरतु आले इम्रान ९७ )

उपरोक्तमा वर्णन गरिएका सबै कुराहरू इस्लामको सरलता र क्षमाशीलताका केही उदाहरणहरू मात्र हुन् ।

र यस्तै इस्लाम भूलचूक र बिर्सेर गरेका कर्ममाथि दोषी ठहराउँदैन । र यस्तै अनभिज्ञ व्यक्तिलाई पनि दोषी ठहराउँदैन

जस्तो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : “ अल्लाहले मेरो उम्मतीहरूको भुलेर विर्सेर अथवा बलजफतीमा परी गरेका कार्य र त्रुटिहरूलाई क्षमा गरिदिएको छ ” । ( इबने माजा, मुस्तदरक हाकिम )

र यी जस्तै धेरै उदाहरणहरू कुरआन र हदीस भरिएका छन् जसलाई इच्छा होस् कुरआन र हदीसमा हेरी लाभान्वित होस् ।

र इस्लामको क्षमा स्वतन्त्रता र सरलताको प्रमाणको लागि रसूल सल्लल्लाहो अलैहे वसल्लमको यो कथन नै प्रयाप्त छ उहाँ सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : “ जब तिमीहरूलाई कुनै कार्य गर्ने आदेश गरियोस् तब आफ्नो क्षमता अनुसार मात्र जति गर्न सक्छौ त्यति नै गर ” । ( बुखारी )

र यस्तै अल्लाहको फर्मान छ :

अर्थ : हे मोमिनहरू! जब तिमीले नमाज पढ्ने विचार गर्छौ तब मुख र कुइनो समेत हात धुनु र आफ्नो टाउकोको मसह (पानीले हात भिजाई निधारदेखि पछाडिसम्म स्पर्श) गर र आफ्ना खुट्टा गोली गाँठोदेखि छेपारीसम्म धोऊ र यदि तिमी अपवित्र छौ भने स्नान गर र यदि तिमी विरामी छौ वा यात्रामा छौ वा तिमीहरूमध्ये कोही शौचालयबाट (दिशाबाट निवृत भएर) आएको छ वा तिमीले स्वास्नीसँग सहवास गरेका छौ र तिमीलाई पानी उपलब्ध छैन भने पवित्र माटोलाई स्पर्श गरी हात र मुखको मसह (स्पर्श) गर । अल्लाहले तिमीलाई अप्ठ्यारोमा पार्न चाहँदैन, बरु त्यो तिमीलाई पवित्र गर्न चाहन्छ र आफ्नो असीम कृपा तिमीलाई

प्रदान गर्न चाहन्छ जसबाट तिमी कृतज्ञ भई नै रह। ( सूरतुल् माइदः ६ )

र आर्को ठाउँमा अल्लहको फर्मान छः

अर्थ : रमाजानको महिना त्यो हो जुन महिनामा कुरआन उतारियो, जो मानिसहरूको लागि पथ प्रदर्शक हो र जसमा मार्गदर्शन र सत्य र असत्यलाई छुट्टयाउने निशानीहरू छन्। तिमीहरूमध्ये जसले पनि यो महिना पाओस् त्यसले पूरा महिनाको ब्रत बसोस् हो, जो बिरामी छ अथवा यात्रामा छ ऊ अन्य दिनहरूमा (ब्रत बसी) त्यसको गणना पूरा गरोस्। अल्लाह तिम्रो निम्ति सुविधा चाहन्छ कठोरता चाहदैन। उसले चाहन्छ कि तिमीले गिन्ती (रोजाको) पूरा गर र अल्लाहले मार्गदर्शन गरेवापत उसको प्रशंसा वर्णन गर, ताकि उसप्रति कृतज्ञ बन्न सक। ( सूरतुल् बकरः १८५ )

र आर्को ठाउँमा अल्लहको फर्मान छः

अर्थ : तसर्थ जहाँसम्म तिमीबाट हुनसक्छ, अल्लाहसित डर मान्ने गर र उसका आदेशहरूलाई सुन्दै र पालन गर्दै जाऊ। र उसको मार्गमा खर्च गर्ने गर, (यो) तिम्रो हकमा राम्रो छ। र जो आफ्नो मनको लोभ र कञ्जूसीबाट सुरक्षित रह्यो त उही नै सफल भयो। ( सूरतुत् तगाबुन १६ )

र जुन कार्यमा अल्लाहले गर्ने नगर्नेबारे अख्तियार दिएको छ त्यसमा पनि नगर्ने नै उत्तम छ। किनकि रसूल ल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " अल्लाहलाई स्वतन्त्रता दिनु अति उत्तम र अधिकतम् प्रिय छ "। ( मुस्नद अहमद )

र उस्तै मुहम्मद ल्लल्लाहो अलैहे वसल्लम आफ्नो साथीहरूलाई यस्ता कर्मबाट रोकेका थिए जुन कष्टदायक छ जस्तो कि एउटा लामो हदीसमा वर्णन छ : कि " तीन जानको समूह रसूल ल्लल्लाहो अलैहे वसल्लमको घर सम्म आए रसूल ल्लल्लाहो अलैहे वसल्लमको पूजा शैली सोध्नुको लागि, अनि जब उनीहरूलाई रसूल ल्लल्लाहो अलैहे वसल्लमको पूजाबारे बताइयो त उनीहरूले रसूल ल्लल्लाहो अलैहे वसल्लमको पूजालाई धेरै कम बुझे र भने : हामी त नबी ल्लल्लाहो अलैहे वसल्लम जस्तो हुन सक्दैनौं किनकि उहाँको सबै पापदोष त अल्लाहले क्षमा गरिदिएका छन् । अनि ती मध्ये एउटाले भन्यो: म त सदैव पूर्ण रात्री नमाज नै पढछु, र आर्कोले भन्यो: म त सदैव व्रत नै बस्नेछु, अनि तेस्रोले भन्यो: म त विहे नै गर्दिन । अनि जब रसूल ल्लल्लाहो अलैहे वसल्लमलाई उनीहरूको कुरो पुग्यो त रसूल ल्लल्लाहो अलैहे वसल्लम उनी समक्ष आई सोध्नु भयो कि के तिमीहरूले नै यस्तो यस्तो भनेका हौ ? र भने सुन ! अल्लाहको शपथ म तिमी भन्दा अधिक अल्लाह सित डर मान्नेवाला हूँ, र सबै भन्दा निष्ठावान पनि छु, तर म व्रत पनि बस्छु र भोजन पनि गर्छु, नमाज पनि पढछु र सुतछु पनि, र विहे पनि गर्छु, सावधान ! जसले पनि मेरो यो पद्धतिबाट विमुख हुन्छ त्यो हामी मध्येको होइन " । (बुखारी)

# इस्लाम निसाफ समानता र न्यायको धर्म

इस्लामको विशेष विशेषता मध्ये समानता र निसाफ पनि हो, किनकि यो अल्लाह द्वारा अवतरित गरिएको छ जुन न्यायकर्ता हो र न्यायलाई मनपराउँछ र अत्याचारलाई घृणा गर्छ । अल्लाहको फर्मान छ :

अर्थ : र कर्मपत्र माझमा राखिनेछ, तब तिमीले त्यसबाट पापीहरूलाई भयभीत भएको देख्नेछौ र तिनीहरूले भन्नेछन् कस्तो अफशोच यो कस्तो किताब हो कि न सानो कुरोलाई छोड्छ न ठूलो, र जो कर्म गरेका हुन्छन् सबैलाइ त्यसमा पाउनेछन्, र तिम्रो पालनकर्ताले कसैमाथि अन्याय वा अत्याचार गर्नेछैन । ( सूरतुल् कहफ ४९ )

र आर्को ठाउँमा अल्लाहको भनाई छ :

अर्थ : यसमा कुनै शंका छैन कि अल्लाह कसैसित अलिकति पनि अन्याय गर्दैन, यदि पुण्य काम गरिएको छ भने त्यसलाई दुई गुणा गरिदिन्छ र आफ्नो तर्फबाट ठूलो पुरस्कार प्रदान गर्दछ । ( सूरतुन् निसा ४० )

र यसै कारण इस्लामको हरेक निर्देशनबाट निसाफ र समानताको झलक देखिन्छ । र हामीलाई थाहा नै छ कि न्याय सबैलाई नै प्रिय हुन्छ यसै कारण इस्लामले सबै निर्देशनहरूमा न्यायलाई प्रमुख स्थान दिएको छ । र न्यायको उत्कृष्टतम् उदाहरण एक अल्लाहको पूजा गर्ने आदेश हो, किनकि जसले सृष्टि गरेछ त्यसैको पूजा गर्नु नै न्यायिक

आधिकार हो, र त्यस बाहेक अरु कसैको उपासना गर्ने खुल्ला अत्याचार र अन्याय हो । अल्लाहको भनाई छ :

अर्थ : र (स्मरण गर) जब लुक्मान(अलैहिस्सलाम)ले आफ्ना छोरालाई नसीहत गर्दै भने: कि मेरो प्यारो छोरा ! अल्लाहको साथमा कसैलाई साझेदार नठहराऊनु, निश्चय नै शिर्क (बहुदेववाद) ठूलो अत्याचार हो । ( सूरतु लुकमान १३ )

र यस्तै यो इस्लामको न्याय नै हो जसलेगर्दा इस्लामले आफ्नो समस्त निर्देशनमा सम्पूर्ण सृष्टिलाई सम्बोधित गरेको छ त्यसमा मुस्लिम, गैरमुस्लिम, नबी, वली, विद्वान, अनभिज्ञ, ज्ञानी, निरक्षर, राजा, प्रजा, आदि सबै शम्मिलित छन् ।

यस्तै जब कसैलाई कुनै कार्यमा स्वतन्त्रता ( अख्तियार ) दिइन्छ त्यो अख्तियार सबैको लागि समान हुन्छ यस्तो छैन कि अमीर (समृद्ध)को लागि रोजने अख्तियार होस् र गरीबलाई नहोस्, बरु सबैलाई समान अख्तियार हुन्छ यो इस्लामको न्याय होइन त के हो ?

र इस्लामको न्याय मध्ये यो पनि हो कि इस्लाममा जुन दण्ड दिने कानून र विधिहरू छन् सबैको लागि समान छन् । र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम अल्लाहको अन्तिम रसूल भन्छन् यदि मेरो छोरीले पनि चोरी गरोस् भने त्यसको हात पनि काटिनेछ । हदीसमा वर्णन छ कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " कि तिमीहरू भन्दा पहिलाका समूहहरू यस कारण बर्बाद गरिए कि जब उनीहरू मध्येका समृद्ध मान्छेले चोरी गऱ्यो तब त्यसलाई छाडिदिन्थे, तर जब कुनै निर्बल गरीब चोरी गऱ्यो तब त्यसलाई दण्डित गर्थे,र

अल्लाहको शपथ यदि मेरो छोरी फातिमाले पनि चोरी गरोस् भने म त्यसको हात पनि काटिहाल्छु " । ( बुखारी )

र यस्तै अल्लाह कर्म गर्ने मान्छेको प्रतिफल पूरापूर दिन्छ बरु त्यस भन्दा अधिक दिन्छ जस्तो कि जस मान्छेले पनि सुकर्म गऱ्यो त्यसलाई त्यसको प्रतिफल दुनियामा पनि दिन्छ र मरणोपरान्त पनि दिन्छ, र आफ्नो स्वर्गमा उच्च स्थान प्रदान गर्छ । अल्लाहको फर्मान छ :

अर्थ : जुन व्यक्तिले सत्कर्म गर्दछ, पुरुष होस् वा स्त्री, र त्यो मोमिन पनि छ, त हामीले उसलाई (संसारमा) पवित्र ( र) आरामको जीवन प्रदान गर्नेछौं र (आखिरतमा) तिनीहरूको राम्रो कार्यको अत्यन्त राम्रो बदला पनि अवश्य नै दिनेछौं । ( सूरतुन् नहल ९७ )

र आर्को ठाउँमा वर्णन छ :

अर्थ : र जो अल्लाहसित डर मान्दछ । अल्लाह उसको लागि उम्कने बाटो सृजना गरिदिनेछ । र उसलाई यस्तो ठाउँबाट जीविका दिन्छ, जसको उसलाई कल्पना पनि छैन, र जसले अल्लाहमाथि भरोसा गर्दछ, त्यो उसको निम्ति पर्याप्त छ ...। ( सूरतुत् तलाक २,३ )

र यस्तै काफिर अवज्ञाकारीहरू आफ्नो कुकर्मको दण्ड दुनिया र मरणोपरान्त पाउने योग्य छन् तर अल्लाह उनीहरूलाई दुनियामा दण्ड नदिई मात्र मरणोपरान्त दण्ड दिनेछ, यो सम्पूर्ण संसार माथि अल्लाहको करुणा र न्याय नै हो ।

र यस्तै अल्लाह आफ्नो दयाले कतिपय आस्थावानहरूको पापलाई क्षमा प्रदान गरिदिन्छ मात्र (शिर्क) बहुदववादलाई क्षमा प्रदान गर्दैन । अल्लाहको फर्मान छ :

अर्थ : निःसन्देह अल्लाह आफ्नो साझेदार बनाउनेलाई क्षमा गर्ने छैन र उस बाहेक अन्य जसलाई चाहन्छ माफ गरिदिन्छ र जसले उसँग कसैको साझेदारी ठहराउँछ, त्यसले जघन्य अपराध गर्दछ । ( सूरतुन् निसा ४८ )

र यस्तै अल्लाहको यो न्याय नै हो जसले आस्थावान र अनास्थावानको कर्मलाई समान गरेको छैन, बरु आस्थावानको कर्मको प्रतिफल आर्को दर्जाको हुन्छ त्यसको आस्थाको कारण, र अनास्थावानको कर्म आर्कै ठाउँमा हुन्छ त्यसको कुकर्मको कारण । अल्लाहको फर्मान छ :

अर्थ : के जो मोमिन छ, ऊ त्यस व्यक्ति सरह हुन सक्छ जो अवज्ञाकारी छ ? दुवै समान हुन सक्दैनन् । जसले ईमान ल्याए र असल कर्म गरिरहे, उनीहरूलाई सँधैं बस्नका निम्ति (जन्नत) स्वर्गका बाग बगैंचाहरू छन्, ती कामहरूको प्रतिफलमा आतिथ्यता छ । जुन कि उनीहरूले गर्दथे । तर जसले आज्ञा उल्लंघन गरे उनीहरूको ठेगाना नर्क हो । जब कुनै बेला उनले त्यसबाट बाहिर निस्किन चाहनेछन् त त्यसैमा फर्काइनेछन् र (उनीहरूसित) भनिनेछ कि (जुन दोजखको यातनालाई) तिमीले झूठो ठान्दथ्यौ त्यसको बदलामा आगोको सज़ाय चाख ।'' ( सूरतुस्सज्दः १८-२० )

र जब अल्लाह आफ्नो कृपाले आफ्नो भक्तहरूको पापलाई क्षमा गरिदिन्छ तब आफ्नो न्यायको कारण नै ती पापहरूलाई क्षमा गर्दैन जसमा आर्काको अधिकार लागोस्

जसरी कसैले कसैमाथि अत्याचार गरेको छ अथवा कसैको अधिकार हनन् गरेको छ, अथवा कसैको इज्जत लूटेको छ कसैसित बलात्कार गरेको छ ....आदि । यस्ता सबै पापहरूलाई अल्लाह क्षमा गर्दैन बरु क्षमा गर्ने अधिकार त्यसैलाई छ जसमाथि अत्याचार भएछ । यसलेगर्दा प्रलयको दिन अत्याचारी अत्याचार गरिएका मान्छेको हवाले गरिन्छ अब त्यो चाहे आफ्नो अधिकारको प्रतिशोध लेओस् चाहे त्यसलाई क्षमा गरोस् । यो पनि अल्लाहको दयाको र न्यायको एउटा उदाहरण हो ।

र यस्तै इस्लामले मुस्लिमहरूलाई एकआर्का साथ न्याय गर्ने आदेश गरेको छ, र आर्को धर्मावलम्बीहरूको साथ व्यवहारमा पनि न्याय गर्ने आदेश दिएको छ । यस्तै समस्त संसारलाई न्याय गर्ने अनुरोध गरेछ । अल्लाहको भनाई छ :

अर्थ : अल्लाहले तिमीलाई न्याय र भलाई गर्न र नजिकका मानिसहरूलाई सहायता दिने आदेश गर्दछ र अमर्यादित र अनुचित कर्महरूबाट र अन्याय र नराम्रा काम गर्नबाट मनाही गर्दछ उसले स्वयम् तिमीलाई निर्देशित गर्दछ कि तिमीले नसिहत ग्रहण गर । ( सूरतुन् नहल ९० )

र अल्लाहले त्यस व्यक्तिको प्रशंसा गरेको छ जुन न्यायलाई आफ्नो आचरणको भाग बनाई सदैव न्याय गर्छ । र न्यायलाई मनपराउने र न्याय गर्नेहरू ती विशिष्टहरू मध्ये एक हुन् , जसलाई अल्लाह प्रलयको दिन आफ्नो अर्शको छायाँमुनि स्थान प्रदान गर्छ । जुन दिन मात्र ७ जनालाई अर्शको छायाँ प्रदान गरिनेछ, र त्यस छायाँ बाहेक अरु कुनै छायाँ हुदैन । अनि ती सात मध्ये जसलाई छायाँ प्राप्ति हुनेछ

त्यस मध्ये सर्वप्रथम न्याय गर्नेहरू हुन् । र यस भन्दा ठूलो दर्जा पनि प्रदान गरिने छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : " न्याय गर्नेवालाहरू प्रलयको दिन अल्लाहको दाहिनोतर्फ प्रकाशले बनेको प्लेटफार्म जस्तो स्थलमा हुन्छन्, र अल्लाहका दुवै हात दायाँ नै हुन्, यो स्थान न्यायकारीहरूको लागि हो जुन आफ्नो प्रजा, परिवार र सबैको साथ न्याय गर्छन् " । ( मुस्नद अहमद )

र न्याय इस्लामको प्रत्येक निर्देशनको मूल आधार हो । हाकिम बनाउनुमा न्याय गर्नु, जसलाई त्यस पदको योग्यता होस् त्यसैलाई हाकिम बनाउनु, झगडामा न्याय गर्नु, जोसंग एक भन्दा अधिक स्वास्नी छिन् उनी बीच न्याय गर्नु, र आफ्नो छोरा छोरी बीच न्याय गर्नु, धनसम्पत्ति बाडफाटबारे न्याय गर्नु, व्यवसाय व्यापारमा न्याय गर्नु । अर्थात हरेक कुरामा न्याय गर्ने आदेश छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : " अल्लाहसित डर मान्दैगर र आफ्नो सन्तान बीच न्याय गर " । ( बुखारी )

अर्थात न्याय इस्लामको सशक्त मार्ग हो यस मार्गमा हिंडेर मनुष्य आफ्नो कल्याण गर्न सक्छ, र न्यायले गर्दा नै हाम्रो समाजको कल्याण हुन्सक्छ । हामी सबै भाषा, रङ्ग, नस्ल, धर्मबाट माथि उठी सबैसित न्याय गरौं । किनकि यो कपट, ईर्ष्या, प्रतिशोध, अत्याचार .... आदिलाई नष्ट गरी एउटा स्वच्छ समाजको निर्माण गर्छ । अल्लहको फर्मान छ :

अर्थ : हे मोमिनहरू! अल्लाहको निम्ति सत्यमा कायम रहदै, सत्य निष्ठाका साथ साक्षी बन । र कुनै जातिको शत्रुता तिमीलाई न्यायको मार्गबाट बिचलित न गरोस्, उनीहरूसित

न्याय गर्ने गर, किनभने यही नै संयमको नजीक हुन्छ, र अल्लाह सित डर । विश्वास गर कि अल्लाहलाई तिम्रा सम्पूर्ण क्रियाकलापहरू बारे राम्ररी थाहा छ । ( सूरतुल् माइदः ८ )

# इस्लाम चरित्र र आचरणको धर्म

उच्च आचरण नै समाजहरूको उन्नतिको रहस्य हो । र इस्लाम संसारिक एवं परलौकिक सफलताको धर्म हो, यसैले गर्दा उच्च आचरण र सभ्यता इस्लामको मूल आधार पनि हो । इस्लामको सबै निर्देशनहरू भित्र चाहे त्यो निर्देशन आस्थाबारे होस् वा पूजा एवं व्यवहारबारे सबै निर्देशनमा इस्लामीय नैतिकताको झलक देखिन्छ ।

यदि मान्छे इस्लामको पूर्ण निर्देशनहरूमा विचार गरोस् भने त्यसलाई यो ज्ञान हुन्छ कि इस्लामको हरेक निर्देशन मानवता र नैतिकताको स्तम्भमा आधारित छ । र प्रमाणको लागि यो नै प्रयाप्त छ कि राम्रो व्यवहार गर्नु ईमान मध्येको हो, र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " म उच्च आचरणलाई पूर्ण गर्नुको लागि पठाइएको छु" । र आर्को हदीसमा छ : " राम्रो आचरणलाई पूर्ण गर्नुको निम्ति मलाई पठाइएको छ " । ( मुस्नद अहमद )

र कुरआन एवं सुन्नतले नैतिकताको पाठ पढाएको छ, र आफ्नो परिवारलाई उच्च आचरण सिकाउने आदेश दिएको छ, तथा तुच्छ आचरणबाट रोकेको छ । र कुनै राम्रो आचरण छैन जसको आदेश कुरआनले नदिएको होस् र त्यसलाई गर्न उत्साहित न गरेको होस् । किनकि राम्रो आचरण र राम्रो बानीले मनुष्यको परोक्ष एवं अपरोक्ष कुराहरू शुद्ध एवं स्वच्छ हुन्सक्छन्, र त्यसको हृदय पवित्र हुन्सक्छ । र तत पश्चात त्यसको हृदय राम्रो र सत्कर्मतर्फ प्रवृत्त हुन्छ र अल्लाह

नजिक प्रशंसनीय भइहाल्छ अनि त्यो मनुष्य सत्मार्गमा लाग्छ । र इस्लामले प्रत्येक उच्च आचरणलाई अपनाउन आदेश गरेको छ जसरी संयम, सहंशीलता, सत्यता, चरित्रवान, दया, क्षमा, दान ..... आदि उच्च आचरणलाई अपनाउनु माथि जोर दिएको छ ।

यसै कारण इस्लाम यस्ता निर्देशनहरू ल्यायो जसबाट मनुष्य महानताको उच्चतम् पदमा विराजमान भइहालोस् अनि आदेश गऱ्यो कि आफ्नो बुवा आमाको साथ उपकार गर, र स्नेहको साथ व्यवहार गर, र स्वास्नीसंग राम्रो व्यवहार गर, र आफ्नो छिमेकीमाथि उपकार गर, र सबैलाई क्षमादान देऊ, र विपत्ति आएकाहरू मथि उपकार गर, सहायता गर, र खरीद विक्रिमा क्षल नगर ।

यस्तै इस्लामले यो पनि आदेश गऱ्यो कि जुन तुच्छ एवं अमानवीय आचरण छन् त्यसलाई छाडिदेऊ त्यो इस्लाममा अवैध छन् । जस्तो क्षलकपट, धोका, झूठ, अश्लीलता, एकआर्काको बुराई गर्नु, अश्लील कुराहरू, अत्याचार .... आदि यी सबै इस्लाममा अवैध छन् । र यस्तो गर्नेवालालाई कष्टदायक दण्डको चेतावनी दिइएको छ ।

र यस्तै नमाज उच्च आचरणलाई दर्शाउने ठूलो उपासना हो जसमा सबै अमीर, गरीब, बहुरूपरङ्गी एकजुट हुन्छन् र एकआर्काको सुख दुःख थाहा पाउँछन् अनि एकआर्काको सहायता गर्छन् ।

र यस्तै इस्लाम धन सम्पत्तिको बारेमा पनि मानवता र नैतिकताको डोरीलाई दृढतापूर्वक समातेकै छ । फेरि यसमा पनि इस्लामले त्यसैलाई वैध गरेको छ जसमा उच्च आचरण

होस् । र जसबाट तुच्छताको बास आउँछ त्यसलाई अवैध गरेको छ । जस्तो सूदव्याज, जुवा आदिको कमाई, अथवा धुम्रपान, मदिरा र छलबाट गरिएको कमाईलाई अवैध र अमानवीय ठहर गरेको छ । र खरीद विक्रिमा विश्वासघात नगर्ने आदेश गरेको छ । रसूल सल्लल्लहो अलैहे वसल्लम भन्नु हुन्छ : " खरीद गर्ने मान्छे र विक्रि गर्ने मान्छेलाई विक्रिलाई रद्दगर्ने अख्तियार छ यहाँ सम्म कि त्यहाँबाट फर्कुन् । फेरि यदि दुवैले सत्य कुरा भनेका छन् र विश्वासघात गरे छैनन् भने दुवैको धनमा बढोतरी हुन्छ, र यदि समाग्रीमा भएको कमीलाई दर्शाएनन् र झुठ बोलेका छन् भने उनको व्यवसायको बरकत (वृद्धि) रोकिन्छ " । ( बुखारी )

यस्तै इस्लामले कसैले खरीदेको वस्तुलाई त्यसभन्दा अधिक मुल्य दिई खरीद गर्नुबाट रोकेको छ, किनकि यसबाट शत्रुता र विरोधको विकास हुन्छ ।

र इस्लामले नैतिकतालाई पूजाको दर्जा दिएको छ, जस्तो कि रसूल सल्लल्लहो अलैहे वसल्लम भन्नु हुन्छ : " आस्थावान मान्छे आफ्नो राम्रो आचरणको कारण नमाजी र सदाचारीको पद ग्रहण गर्छ" । ( अबू दाऊद )

यसै कारण अल्लाहको भनाई छ :

अर्थ : तपाई क्षमाको नीति अपनाउनुस्, र असल कामको उपदेश दिदै गर्नुस् र अज्ञानीहरूबाट टाढा बस्नुस् । ( सूरतुल् अअ्राफ १९९ )

र यस्तै राम्रो व्यवहार गर्ने मान्छेको लागि अल्लाहले अग्ला अग्ला स्मारक बनाएको छ, जस्तो कि रसूल सल्लल्लहो अलैहे वसल्लमको साथी हजरत अब्दुल्लाह बिन अमर

रजीअल्लहो अन्होले भन्नु हुन्छ कि रसूल सल्लल्लहो अलैहे वसल्लम नत अश्लील एवं निर्लज्ज थिए नत अश्लीलता र निर्लज्जतालाई मनपराउँथे । र रसूल सल्लल्लहो अलैहे वसल्लमले भन्नु हुन्छ कि : " तिमी मध्ये राम्रो त्यो हो जसको स्वभाव र आचरण उत्तम छन् " र आर्को ठाउँमा उहाँको फर्मान छ : "तिमी मध्ये सबैभन्दा प्रिय मेरो नजिक राम्रो आचरणवाला छ र परलोकमा ( आखिरतमा ) मेरो निकट हुनेवाला छ, र तिमी मध्ये सबै भन्दा घृणा योग्य त्यो मान्छे हो जसको आचरण राम्रो छैन र त्यो प्रलयको दिन म भन्दा टाढा हुनेछ " । ( मुस्नद अहमद )

र यस्तै जब रसूल सल्लल्लहो अलैहे वसल्लमबाट सोधियो कि सबै भन्दा धेरै कुन कर्म गर्नेहरू स्वर्गमा जान्छन् ? त रसूल सल्लल्लहो अलैहे वसल्लमले भन्नु भयो: " अल्लाहसित डर मान्नेहरू, र राम्रो व्यवहार गर्नेहरू " । ( तिर्मिजी )

र यस्तै हामीलाई रसूल सल्लल्लहो अलैहे वसल्लमले हाम्रो पथप्रदर्शन गर्दै यो भन्नु भएको छ कि हामी आफ्नो छोरीहरूको विवाह त्यस मान्छेसित गरौं जसको व्यवहार उच्चतम् होस् र चरित्रवान होस्, किनकि सुखद जीवनको स्वाद उच्च आचरण राख्ने मान्छेसंग नै मिल्छ । रसूल सल्लल्लहो अलैहे वसल्लमको भनाई छ : " जब यस्तो मान्छे विवाहको प्रस्ताव लिएर आउँछ जसको धर्म र आचरणबाट तिमी सन्तुष्ट छौ भने त्यसको विहे गरिहाल । यदि तिमीले यस्तो गरेनौ भने संसारमा भीषड उत्पात उत्पन्न भइहाल्छ " । ( इब्ने माजा )

# पवित्र कुरआन

अल्लाह कौशल सम्पन्न छ र आफ्नो कौशलताले नै अल्लाहले आफ्नो सन्देष्टाहरूको साथ ग्रन्थहरू पनि पठायो जुन संदेष्टाहरूको धर्मलाई स्पष्ट गरोस्, र यो ग्रन्थहरू अल्लाहका वाणी हुन्, र ती संदेष्टाहरूको उम्मतीहरूको लागि मार्गदर्शन हुन । जसलाई उम्मतीहरूको सन्देष्टाहरू उनी सम्म पुऱ्याउँछन् र त्यसको स्पष्टीकरण गर्छन् ।

र निःसन्देह अल्लाहले इब्राहीम माथि **सोहोफ** अवतरित गऱ्यो, र दाऊदमाथि **जबूर**, र मूसामाथि **सोहोफ** एवं **तौरात**, र ईसामाथि **इन्जील** अवतरित गऱ्यो ।

र अल्लाहले मुहम्मद सल्लल्लहो अलैहे वसल्लमको उम्मतीहरूको लागि उपरोक्त ग्रन्थहरू भन्दा महान र सर्वव्यापी ग्रन्थ पवित्र **कुरआन**लाई रोज्यो । मुस्लिमहरूको ग्रन्थ कुरआन हो, त्यही उनको संविधान हो जसको अनुशरण गर्ने आदेश छ । र कुरआन अरु सबै ग्रन्थहरू भन्दा विशिष्ट र विचित्र छ, यसमा यस्ता विशेषताहरू छन् जुन पहिलाका ग्रन्थहरूमा थिएन ।

यस कुरआनको विशेषताहरू मध्ये यो हो कि यो ग्रन्थ पहिलाको ग्रन्थहरूको रक्षक हो । र रक्षकको अर्थ हो कि यो ग्रन्थ पहिलाका ग्रन्थहरूबारे गवाही दिन्छ, र त्यसको सत्यताको समर्थन गर्छ, र ती ग्रन्थहरूले वर्णन गरेका कुराहरूको समर्थन गरी ती ग्रन्थहरूको रक्षा गर्छ । र रक्षा गर्नुको कारण यो ती सबै ग्रन्थहरू माथि सर्वश्रेष्ठ छ ।

र रक्षा गर्नुको अर्थ यो पनि हो कि यो कुरआन यस कुरालाई स्पष्ट पार्छ कि ती ग्रन्थहरूमा थपघट भन्दा अघि के के कुरा ती ग्रन्थहरूमा थियो । फेरि त्यसका अनुयायीहरूले आफ्नो इच्छा अनुसार ती ग्रन्थहरूमा हेरफेर र थपघट गरे । र त्यो सबै कुरालाई प्रष्ट पार्छ जुन ती ग्रन्थहरूमा थिए जसरी एक अल्लाहको पूजा गर्नु, र सन्देष्टाहरू माथि आस्था राख्नु....आदि । अल्लाहको फर्मान छ :

अर्थ : र (हे पैगम्बर !) हामीले तपाईंलाई सत्यका साथ यो किताब (कुरआन) प्रदान गरेका छौं, जुन आफूभन्दा अगाडिका ग्रन्थहरूलाई प्रमाणित गर्दछ र ती सबैको रक्षक हो । तसर्थ यसमा जुन आदेश अल्लाहले दिएको छ, सोही अनुसार नै तिनलाई आदेश गर्नुस् र यस सत्यलाई त्यागेर उनीहरूको इच्छाको पूर्ति नगर्नु । हामीले तिमीहरू मध्येबाट प्रत्येक समुदायका एउटा विधान र एउटा तरिका (पद्धति) निर्धारित गरेका छौं र यदि अल्लाहले चाहेको भए तिमी सबैलाई एउटै समुदायमा राखिदिन्थ्यो, तर जुन आदेशहरू उसले तिमीलाई दिएको छ त्यसमा उसले तिम्रो परीक्षा गर्न चाहन्छ, तसर्थ तिमी असल कर्म गर्न छिटो गर । तिमी सबैलाई उसै छेंउ फर्कि जानु पर्नेछ, तसर्थ जुन कुरामा तिमीहरू विवाद गर्ने गर्दछौ उसले तिमीलाई बताई दिने छ । ( सूरतुल् माइदः ४८ )

र कुरआनको विशेषता मध्ये यो पनि हो कि यसको सुरक्षाको जिम्मेवारी अल्लाहले आफै लिएको छ। यस विपरीत यस भन्दा पहिलाका ग्रन्थहरूको रक्षाको जिम्मेवारी त्यसका अनुयायीहरू माथि थियो । अल्लाहको फर्मान छ :

अर्थ : हामीले नै तौरात उतार्‍यौं, जसमा मार्गदर्शन र प्रकाश थियो । त्यसै अनुसार नबी र ज्ञानीहरूले जो ( अल्लाहका) आज्ञाकारी थिए यहूदीमा यसै तौरात अनुसार फैसला गर्दथे । किनभने तिनीहरूलाई अल्लाहको किताबको रक्षा गर्ने आदेश थियो, र तिनीहरू यसको गवाह पनि थिए, तसर्थ तिमी मानिसहरू सित नडराउनु र मसँग डर मान्नु र मेरो आयतहरूलाई अलिकति मूल्यमा न बेच्नु । जसले अल्लाहले प्रदान गरेको आदेशहरू बमोजिम फैसला गर्दैनन् तिनीहरू नै काफिर हुन् । ( सूरतुल् माइदः ४४ )

तर अहले किताब ( यहूदी, ईसाई )हरूले आफ्नो ग्रन्थहरूको सुरक्षा गरेनन् । बरु त्यसमा थपघट गरे, यसै कारण त्यसका निर्देशनहरू एकआर्का विरुद्ध भए । तर कुरआनको सुरक्षा अल्लाह गरिरहेको छ , यसै कारण आज सम्म कसैले पनि त्यसमा थपघट गर्न सकेनन् । अल्लाहको फर्मान छ :

अर्थ : (निःसन्देह) हामीले नै कुरआनलाई उतारेका छौं र हामीनै यसको संरक्षक हौं । ( सूरतुल् हिज्र ९ )

र तपाई विचार गर्नुस् कि लगभग १४०० वर्ष बितिसक्यो र कतिपय प्रयास पनि भयो कि यस कुरआनमा केही थपघट गरौं तर कसैले पनि एक मात्रा पनि यताउता गर्न सकेनन् । र के अल्लाह भन्दा शक्तिमान र विवेकशाली सर्वगुण सम्पन्न कोही छ ? र यसको सुरक्षाको साथ यस कुरआनलाई अति सरल पनि बनाएछ । यसलाई कण्ठ गर्नु, पढनु, समझ्नु सबै अति सजिलो छ । अल्लाहको भनाई छ :

अर्थ : र हामीले कुरआनलाई बुझ्नको निम्ति सरल गरिदियौं, त कोही छ जसले नसीहत हासिल गरोस् ? ( सूरतुल् कमर १७ )

र सबैको लागि एकनास सजिलो छ । यस कुरआनको विशेषता यो हो कि यसलाई अरबी पनि बुझ्छ र अजमी पनि यसलाई कण्ठ गर्नसक्छ विना कुनै कष्ट । यसैले गर्दा यसलाई मुस्लिमका ५, ६ वर्षका ससाना बच्चाहरू पनि कण्ठ गर्छन्, र पूरा विश्वमा सबै भन्दा कण्ठ गर्ने ग्रन्थ एवं किताब कुरआन नै हो ।

र यसको विशेषता मध्ये यो पनि हो कि यसलाई पढनु पूजा हो, र यसको एक एक अक्षर माथि १० पुण्य अथवा त्यस भन्दा बढी ७०० सम्म पनि पाइन्छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमको कथन छ : " जसले अल्लाहको किताब भित्रबाट एक अक्षर पनि पढछ त्यसलाई १० पुण्य मिल्छ, र म यो भन्दैन कि अलिफ लाम मीम एउटै अक्षर हो, बरु अलिफ अक्षर हो, र लाम अक्षर हो, र मीम अक्षर हो "। अर्थात अलिफ लाम मीम तीन अक्षर भयो र त्यसको तीस पुण्य भयो । ( तिर्मिजी )

र यस्तै कुरआन सुनेर आत्मालाई शान्ति एवं संतुष्टि प्राप्त हुन्छ यो पनि यस कुरआनको विशेषता हो । जब कि कुनै आर्को किताब सुन्दाखेरि यस्तो आभास हुँदैन ।

र कुरआनको विशेषता मध्ये यो पनि हो कि कुरआन शारीरिक एवं आत्मिक रोग निकोपार्ने स्वस्थकर पनि हो । र हृदयलाई बहुदेववाद, विमुख्ता, पाप, दुष्कर्मबाट मुक्त गर्छ, र

शारीरिक विरामीलाई यसको श्लोक पढेर फूँके पश्चात निको पार्छ । अल्लाहको कथन छ :

अर्थ : यो कुरआन जुन हामी उतार्दैछौं मोमिनहरूका लागि स्वस्थकर र दया हो, र अत्याचारीहरूका लागि त यसबाट हानिमा नै वृद्धि हुनेछ । ( सूरतुल् इस्रा ८२ )

र जसरी प्रत्येक सन्देष्टाको चमत्कार हुन्थ्यो त्यसरी हाम्रो नबीको चमत्कार यो कुरआन हो । र यस कुरआनको चमत्कार अनेकौं प्रकारका छन् । यो कुरआन आफ्नो भाषा र शैलीमा एउटा विचित्र चमत्कारी ग्रन्थ हो । यसको सरल स्वच्छ अक्षर शब्द वाक्यको चुनाव यस्तो छ कि सम्पूर्ण विश्व त्यसमा अचम्भित छ। यसै कारण कुरआनले संपूर्ण संसारलाई यो हाँक दियो कि यदि तिमीलाई केही संदेह होस् कि यो कुरआन अल्लाहको वाणी होइन भने यसै जस्तो मात्र एक सूरः अथवा अध्याय बनाएर ल्याऊ । अल्लाहको फर्मान छ :

अर्थ : हामीले आफ्ना सेवकमाथि जे उतार्‍यौं, त्यसमा तिमीलाई यदि शंका छ र तिमी साँचो भए त्यस्तै एउटै ( सूरह) बनाएर देखाऊ, र तिमीले अल्लाह बाहेकका आफूलाई मद्दत गर्नेहरूलाई बोलाई ल्याऊ । तर यदि तिमी गर्न सकेनौं भने र तिमी कहिल्यै पनि गर्न सक्दैनौं (तसर्थ) त्यस आगोसंग डराऊ जसको इन्धन मानिस र ढुङ्गाहरू हुन् । जुन नास्तिकहरूका लागि तयार गरिएको हो । ( सूरतुल् बकरः २३, २४ )

र यस्तै कुरआनको यो पनि चमत्कार हो कि त्यो समस्त संसारलाई एकनास आव्हान गर्छ । अर्थात चाहे त्यो मुस्लिम होस् वा गैर मुस्लिम, पुरुष होस् वा महिला, विद्वान

होस वा निरक्षर सबैलाई शान्तिको मार्गतर्फ बोलाउँछ । अल्लहको फर्मान छ :

अर्थ : के यिनीहरू कुरआनमा चिन्तन-मनन् गर्दैनन् ? यदि यो अल्लाह बाहेक अरु कसैको तर्फबाट भएको भए त्यसमा निःसन्देह (धेरै) विरोधाभाषपूर्ण कुराहरू पाउने थिए । ( सूरतुन् निसा ८२ )

र यस्तै कुरआन चमत्कारी छ आफ्नो निर्देशनहरूमा पनि, किनकि यसका निर्देशनहरू सबैलाई समानताको पाठ पढाउँछन् । र यो बताउँछन् कि कसैलाई कसैमाथि प्रधानता प्राप्त छैन, प्रधान त्यो नै हुन्छ जुन निष्ठावान होस् । र यो आफ्नो निर्देशनद्वारा भक्त एवं पूज्य बीच संबन्ध जोडछ । र मुस्लिमलाई गैर मुस्लिम एवं जनावर र निर्जीवबाट पनि त्यसको सम्बन्धलाई जोडछ । अल्लाहको फर्मान छ :

अर्थ : र हामीले तपाई माथि (यस्तो) किताब उतारेका छौं कि यसमा हरेक कुराको वर्णन बिस्तारपूर्वक छ । र मुसलमानहरूको लागि मार्गदर्शन र दया तथा शुभ सन्देश छ । ( सूरतुन् नहल ८९ )

र यस्तै कुरआनले आफ्नो अनुयायीहरू समक्ष यस्ता वृतान्तबारे कथाहरू वर्णन गर्‍यो जसलाई मात्र कुरआनको माध्यम द्वारा सबैलाई थाहा भयो । अल्लाहको फर्मान छ :

अर्थ : यी (समाचारहरू) अदृश्यका खबरहरू हुन् जुन कि हामीले तपाईतिर वह्यबाट पठाउँदछौ र तिनको जानकारी यसभन्दा अगाडि न तपाईलाई थियो न त तपाईको समुदायलाई । तसर्थ धैर्य गर्नु , किन भने अन्तिममा परिणाम अल्लाहसित डर्नेहरूको राम्रो हुन्छ । ( सूरतु हूद ४९ )

र यस्तै कुरआनको चमत्कारको उदाहरण यो पनि हो कि कुरआनले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जीवनमा यस्ता घटनाहरुको भविष्यवाणी गऱ्यो जुन घटना त्यस बखतसम्म घटित भएको थिएन । अल्लाहको फर्मान छ :

अर्थ : निश्चय नै अल्लाहले आफ्नो रसूललाई सत्यकासाथ साँचो सपना देखायो । "कि यदि अल्लाहले चाह्यो भने तिमी अवश्य मस्जिदे हराम (कअ्बामा) निर्भिक भएर प्रवेश गर्नेछौ, आफ्नो टाउकोको कपाल खौराएको वा केश सानो पार्दै तिमीलाई कुनै त्रास हुनेछैन ।" अनी उसले ती कुराहरू जान्दछ जुन तिमी जान्दैनथ्यौ । अतः यसभन्दा पहिला उसले तिमीलाई शीघ्र प्राप्त हुनेवाला विजय प्रदान गरिदियो । उही हो जसले आफ्नो रसूललाई मार्गदर्शन र सत्यधर्मको साथ पठायो, ताकि उसलाई तमाम धर्महरूमाथि अधिपत्य प्रदान गरोस् र साक्षीको हैसियतले अल्लाह पर्याप्त छ । ( सूरतुल् फतह २७,२८ )

र यस्तै यो खबर पनि जसमा कुरआनले रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई केही मान्छेहरूको बारेमा यो बतायो कि यिनीहरू तपाईमाथि ईमान ल्याउँदैनन् बरु बहुदववादीकै अवस्थामा यिनीहरूको मृत्यु हुनेछ । र यस्तै गोप्यको कुरालाई पनि बताउनु यसको चमत्कार हो । र स्वर्ग नर्क, हिसाब किताब, प्रलय ... आदिको खबर दिनु पनि यस कुरआनको चमत्कारको प्रमाण हो । अल्लाहको भनाई छः

अर्थ : जसले हाम्रो आयतहरूलाई झूठा भने र अभिमानपूर्ण व्यवहार गरे, तिनीहरूका लागि आकाशका ढोकाहरू खोलिने छैन्, र तिनीहरू कहिले पनि स्वर्गमा जाने

छैनन् जबसम्म कि, ऊँट सियोको प्वाँलबाट छिर्दैन। र पाप गर्नेहरूलाई हामीले यस्तै सजाय दिने गर्छौं। यस्ता मानिसहरूका लागि नर्कको आगो बिछ्यौना (ओछ्यान) हुनेछ र माथीबाट त्यसैको ओढने पनि। र यस्ता अत्याचारीहरूलाई हामीले यस्तै सजाय दिने गर्छौं। ( सूरतुल् अअ्राफ ४०,४१ )

र आर्को ठाउँमा अल्लाहको वर्णन छ :

अर्थ : नि:सन्देह यस कुरआनले त्यो बाटो देखाउँछ जो सबैभन्दा सोझो छ, र मोमिनहरूलाई जसले सत्कर्म गर्दछन्, शुभसन्देश दिन्छ कि तिनीहरूको निम्ति ठूलो पुरस्कार छ। र यो कि जो आखिरतमाथि ईमान राख्दैनन्, तिनीहरूको निम्ति हामीले कष्टदायक सजाय तयार गरि राखेका छौं। ( सूरतुल् इस्रा ९,१० )

# सन्देष्टा मुहम्मद बिन अब्दुल्लाह सल्लल्लाहो अलैहे वसल्लम

अल्लाहको कौशलले र दयाले नै अल्लाहले हरेक समूहतिर सन्देष्टा एवं ईश्दूत पठायो जुन ती समूहहरूलाई अल्लाहको निर्देशन सुनाउँथे । त जसले अनुशरण गर्‍यो त्यसलाई शुभ सन्देश पनि सुनाउँथे, र जसले इन्कार गर्‍यो त्यसलाई अल्लाहको तिरस्कारबाट डराउँथे ।

र यसै क्रममा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई पनि सन्देष्टा एवं दूत बनाएर र सबै दूतहरूको समापक बनाएर पठाइयो । र रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई हर प्रकारले विशिष्ट बनाइयो । र सम्पूर्ण जगतको लागि सन्देष्टा बनाई हाशिमी वंशमा उहाँको जन्महुने निर्धारित गरियो ।

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जन्म मक्का नामी नगरमा सोमबारको दिन हातीको घटना घटेको साल ५७१ ई.सं. मा भयो । उहाँको बाबुको नाम अब्दुल्लाह र आमाको नाम आमिना थियो । र उहाँलाई उहाँको बाजेले मुहम्मद नाम दिनु भयो । र उहाँको बुवाको देहान्त उहाँको जन्मभन्दा पहिला नै भइसकेको थियो ।

र उहाँको ४ वर्षको उमेरमा जिब्रीलले उहाँ सम्म आउनु भयो, यस्तो अवस्थामा कि उहाँ अरु केटाहरूसंग खेली रहनुभएको थियो । अनि उहाँलाई समात्नु भयो, र लेटाएर उहाँको सीनालाई च्यात्नु भयो । र उहाँको मुटुलाई निकाली त्यस भित्रबाट एउटा भ्रुण निकालेर फाले अनि भने:“ यो

शैतानको अंश थियो तिमीमाथि ” । अनि उहाँको मुटुलाई सुनको तश्त ( थाली )मा जमजमको पानीले स्वच्छ पार्नु भयो । फेरि त्यसलाई त्यसको ठाउँमा राखेर जस्ताको त्यस्तै गरिदिनु भयो । अनि उहाँसंग खेलीरहेका बच्चाहरू दुगुर्दै उहाँकी धाईआमा हलीमा सम्म पुगे र सारा घटना उनीलाई सुनाए र भने मुहम्मदको त हत्या गरियो । तत पश्चात सबै दुगुर्दै उहाँ सम्म आए त के हेर्छन् कि उहाँको अनुहारको रङ्ग बदलिएको छ र हजरत अनस यस हदीसको वर्णनकर्ता भन्नु हुन्छ कि म रसूल सल्लल्लाहो अलैहे वसल्लमको सीना ( छाती )माथि त्यस सिलाईको धर्को हेरेको थिएँ । ( मुस्लिम )

र रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो नौयुवा अवस्थामा आफ्नो जातिबन्धुको साथ मक्कामा व्यतीत गर्नु भयो, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लम आफ्नो जाति र समुदाय बीच आफ्नो राम्रो आचरणले प्रख्यात हुनु भयो । त्यस मध्ये केही निम्न हुन ! सचरित्रवान, दयावान, सदाचारी, धरोहरी, सत्यवान ... आदि हो । जसले गर्दा उहाँको समाजमा एउटा विशिष्ट स्थान बनी हाल्यो, र सबै उहाँको आदर गर्न थाले, र आफ्नो झगडाहरूमा उहाँलाई न्यायकर्ता घोषित गरे ।

र विगतमा आएका सबै दूतहरू र सन्देष्टाहरूले मुहम्मद एवं अहमद नामक अन्तिम सन्देष्टा आउने भविष्यवाणी पनि गरेका थिए । कुनै पनि यस्तो सन्देष्टा आएन जसले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आगमनको भविष्यवाणी नगरेको होस् । अल्लहको फर्मान छ :

अर्थ : जब अल्लाहले पैगम्बरहरूसँग वाचा गरायो कि जे जति मैल तिमीलाई किताब र ज्ञान प्रदान गर्दछु, अनि तिम्रो नजिकमा कुनै पैगम्बर आउँछ जसले तिम्रो किताबको पुष्टि गर्दछ त तिमीले अवश्य नै त्यसमाथि विश्वास गर्नुपर्दछ र उसको मद्दत गर्नुपर्ने छ । (वाचा लिएपछि) सोध्यो, के तिमीले वचन दियौ र यस वचन बद्धतामा मलाई संरक्षणको रूपमा ठहरायौ ?। तिनीहरूले भने (हो) हामीले वाचा गऱ्यौ । (अल्लाहले) भन्यो तिमीहरू साक्षी भईराख र म पनि तिम्रो साथमा साक्षी रहने छु । ( सूरतु आले इम्रान ८१ )

र यो ईसा अलैअिस्सलाम हुन् जसलाई अल्लाहले बनी इस्राईल तर्फ सन्देष्टा बनाएर पठायो । उहाँलाई प्रदान गरिएको ग्रन्थ उहाँभन्दा पहिला आएका सन्देष्टा मूसा अलैहिस्सलामको प्रमाणिकरण गर्छ, र उहाँभन्दा पछि आउने सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आगमनबारे भविष्यवाणी गर्छ । अल्लाहको भनाई छ :

अर्थ : र जब मरियमको छोरा ईसा(अलैहिस्सलाम)ले भने: कि हे मेरो क़ौम । बनी इस्राईल ! म तिमी सबैको लागि अल्लाहबाट पठाइएको रसूल हूँ । म भन्दा पहिलेको किताब तौरातको म प्रमाणित गर्नेवाला छु र म पछि आउने एउटा संदेष्टा जसको नाम अहमद हुनेछ, उनको शुभागमनको शुभ-सन्देश सुनाउँछु । अनि जब उनी तिनीहरूको पासमा स्पष्ट निशानीहरू लिएर आए, तब तिनीहरूले भन्न थाले कि यो त स्पष्ट जादू हो । ( सूरतुस्सफ ६ )

र अल्लाहले यो खबर दिएको छ कि मुहम्मदको वर्णन र भविष्यवाणी विगतका सबै ग्रन्थहरूमा छ । अल्लाहको भनाई छः

अर्थ : जुन मानिसहरूले यस्ता रसूल, नबी उम्मी ( निरक्षर) को अनुशरण गर्छन्, जसलाई उनीहरूले आफुकहाँ तौरात र इन्जीलमा लेखिएको पाउँछन् । उनले उनीहरूलाई असल कुराको आदेश गर्दछन् र नराम्रा कुराहरूबाट मनाही गर्दछन् र स्वच्छ कुरालाई हलाल (स्वीकार्य) बताउँछन् र अपवित्र कुरालाई हराम (वर्जित) बताउँछन् र तिनीहीरु माथिबाट त्यो बोझ उतार्दछन् जुन अहिलेसम्म उनीहरू माथि लादिएका थिए बन्धनहरूलाई फुक्का गर्दछन् जसमा उनीहरू जकडिएका थिए । अत : जो मानिसहरू त्यस नबीमा विश्वास गर्दछन् र उनको समर्थन गर्दछन् र उनको सहायता गर्दछन्, र त्यस प्रकाशलाई मान्दछन् जो उनको साथमा पठाइएको छ । यस्ता मानिसहरू पूर्ण सफलता प्राप्त गर्नेवाला छन् । ( सूरतुल् अअ्राफ १५७ )

र यसलाई ईसाई राहिबहरूको यो कुरो पनि प्रमाणित गर्छ कि जब उनीहरूले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई देखे अनि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममा ती सबै गुणहरू स्पष्टरूपले हेरे जुन उनीहरूको किताबमा उल्लेख थियो ।

र जब मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम परिपक्ताको उमेरमा पुगे अर्थात ४० वर्षको भए तब अल्लाहले उहाँलाई आफ्नो सन्देष्टा बनाई दूतत्वको महत्वपूर्ण कार्यबाट सम्मानित गर्‍यो, र सम्पूर्ण संसारको लागि मार्गदर्शक बनाई

यो आदेश गऱ्यो कि सबैलाई अन्धकारबाट प्रकाशतिर बोलाऊ । र यो घटना ६१० ईसवी संबतमा घटित भयो ।

र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको दूतत्व सारा संसारको लागि ठूलो दयाको प्रतीक थियो । किनकि अल्लाहले उहाँकै माध्यमबाट सम्पूर्ण जगतलाई घोर अन्धकारबाट प्रकाशतिर उन्मुख गऱ्यो । र अज्ञानताबाट ज्ञानको प्रकाशतिर, मानव पूजाबाट ईश्वरको पूजातर्फ, र संकुचित पृथ्वीबाट खुल्ला संसारतर्फ, र अधिकतम् धर्महरूको अन्याय अत्याचारबाट इस्लमको न्याय एवं समानतातर्फ प्रवृत्त गऱ्यो । अल्लाहको फर्मान छ :

अर्थ : निःसंदेह अल्लाहको मोमिनहरू माथि ठूलो अनुकम्पा छ कि उसले तिनीहरूको माझमा तिनीहरू मध्येबाटै एउटा रसूल पठायो जसले कि अल्लाहका आयतहरू पढेर उनीहरूलाई सुनाउँदछ र तिनलाई पवित्र गर्दछ र उनलाई किताब र बुद्धिमता सिकाउँदछ, यिनीहरू यसभन्दा पहिला खुला रूपमा पथबिचलित थिए । ( सूरतु आले इम्रान १६४ )

र आर्को ठाउँमा अल्लाहको फर्मान छ :

अर्थ : र (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम !) हामीले तपाईलाई सम्पूर्ण जगतको निम्ति सर्वथा दयाको प्रतीक बनाएर पठाएका छौं । ( सूरतुल् अंयिबा १०७ )

र आर्को ठाउँमा अल्लाहको फर्मान छ :

अर्थ : उही हो जसले उम्मिहरूमा (अनपढहरूमा) तिनीहरू मध्येबाट एउटा रसूल पठायो । जसले उनको सामु उसका आयतहरू पढेर सुनाउँछ र उनीलाई पवित्र गर्दछ र

उनीहरूलाई किताब र तत्वदर्शीता सिकाउँदछ, र निःसन्देह यसभन्दा पहिला यी मानिसहरू खुल्ला मार्ग बिचलनमा थिए । र ती अन्य मानिसहरूका लागि पनि जो अझै उनीसित भेटेका छैनन्, उनीहरू मध्यकै हुनेछन् । र ऊ सर्वशक्तिशाली, तत्वदर्शी छ । यो अल्लाहको उदार अनुग्रह हो, जसलाई चाहन्छ, त्यसलाई प्रदान गर्दछ । र अल्लाह अपार अनुग्रहको स्वामी छ । ( सूरतुल् जुमुअः २,३,४ )

र अल्लाहले रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई मानवताको उत्कृष्टतम् नैतिकता प्रदान गऱ्यो, जस्तो कि अल्लहको फर्मान छ :

अर्थ : निःसन्देह तपाई उच्च आचरणवाला हुनु हुन्छ । ( सूरतुल् कलम ४ )

र अल्लाहले उहाँको मुटुमा नै दया र करुणलाई जागृत गरिदियो, यसैकारण उहाँ सबैमाथि दयावान हुनुहुन्थ्यो । अल्लाहको फर्मान छ :

अर्थ : (हे मानिसहरू हो !) तिमीहरूको माझमा तिमीहरू मध्येबाटै एउटा पैगम्बर आएका छन् । तिम्रो पीडाबाट उनी दुःखी हुन्छन् र तिम्रा भलोको निम्ति चिन्तित रहन्छन्, र ईमानवालाहरूलाई निकै माया गर्ने र दयालु छन् । ( सूरतुत्तौबः १२८ )

र उहाँलाई स्वीकार्य गर्नु र उहाँको अनुशरण गर्नु पनि उहाँको दया र करुणाको कारण नै थियो । अल्लाहको फर्मान छ :

अर्थ : (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम !) अल्लाहको कृपाले तपाईको मन यिनीहरू प्रति नरम छ र यदि

तपाई कटु वचन र कठोर हृदयको भएको भए यिनीहरू तपाईबाट टाढा भागिहाल्दथे, तसर्थ तिनीहरूलाई क्षमा गरिदिनुस् र तिनीहरूको निम्ति क्षमाको लागि प्रार्थना गर्नु र आफ्ना कामहरूमा यिनीहरूसँग सरसल्लाह गर्ने गर्नु, र जब कुनै कामबारे दृढ निश्चय गर्दछौ भने अल्लाहमाथि पूर्ण भरोसा राख। निःसन्देह अल्लाह भरोसा गर्नेहरूलाई प्रेम गर्दछ। ( सूरतु आले इम्रान १५९ )

र जसले पनि उहाँको जीवनी पढेका छन् तिनलाई थाहाहोला कि उहाँको आचरण र स्वभाव कस्तो थियो। उहाँको उत्कृष्ट आचरण मध्ये सत्यता, धरोहरता, दया, परोपकारिता, करुण, बलशालिता, लज्जा, सहनशीलता, मीठो स्वरमा कुरा गर्नृ ..... आदि हो। ( र जसलाई रसूल सल्लल्लाहो अलैहे वसल्लमको बारेमा अधिक जानकारी चाहिन्छ त्यो मेरो किताब **विश्वको नायक**, र **मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम मानवताको दूत**को अध्यन गरोस् ( अनुवादक) )

र उहाँको जीवनी भित्र यी जस्ता धेरै नैतिकताका उदाहरणहरू भरिएका छन् । जस्तो कि उहाँको साथी अनस बिन मालिक रजीअल्लहो अन्हो भन्नु हुन्छ : “ कि म उहाँ सल्लल्लहो अलैहे वसल्लमको साथ जाँदै थिएँ र उहाँमाथि बाक्लो किनारा भएको चादर ( शाल ) थियो, अनि एउटा गाउँले मान्छेले उहाँको चादरलाई यति शक्तिले थिच्यो कि चादरको आर्को कुना जुन उहाँको घाँटीनिर थियो त्यो प्रभावित भई कस्यो, अनि त्यस गाँउले मान्छेले भन्यो : हे

मुहम्मद अल्लाहको सम्पत्तिबाट मलाई केही दिने आदेश गर। अनि रसूल सल्लल्लहो अलैहे वसल्लम त्यसतर्फ आफ्नो अनुहार फर्काउनु भयो, र हाँस्नु भयो, फेरि आदेश गर्नु भयो कि यस गाउँलेलाई केही धन प्रदान गरियोस् "। ( बुखारी )

र यस्तै अब्दुल्लाह बिन अब्बास रजीअल्लाहो अन्हो वर्णन गर्नुहुन्छ कि " रसूल सल्लल्लहो अलैहे वसल्लम सबै भन्दा ठूलो दानी थिए। र उहाँ रमजानको महिनामा अरु ठूलो दानी भइहाल्नु हुन्थ्यो जब जिब्रीलसित भेटगर्नु हुन्थ्यो, र जिब्रील प्रत्येक रमजानको प्रत्येक रात्री उहाँसित भेटथे, र कुरआनको पाठ गराउँथे । अनि उहाँ सल्लल्लहो अलैहे वसल्लम वायु भन्दा अधिक दानी भइहाल्थे "। ( बुखारी, मुस्लिम )

र अनस बिन मालिक उहाँ सल्लल्लहो अलैहे वसल्लमको हाँसीमजाक एवं नम्रता र बच्चाहरू माथि उहाँको स्नेहलाई दर्शाउँदै वर्णन गर्नुहुन्छ कि " मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हामी मध्ये सबैभन्दा राम्रो आचरणवान थिए, तपाई हाम्रो घर आउनु हुन्थ्यो र मेरो सानो भाइसंग भन्नु हुन्थ्योः हे अबू उमैर नुगैरले के गऱ्यो ? अनि फेरि त्योसँग खेल्नु हुन्थ्यो "। ( बुखारी, मुस्लिम )

र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम नबीहरूमा सबैभन्दा उत्कृष्ट र अल्लाहलाई सबैभन्दा प्रिय सन्देष्टा हुनुहुन्थ्यो। यसको प्रमाणिकरण सबै नबीहरूले गरेका छन् , र प्रलयको दिन पुनः गर्ने छन् । जब समस्त सृष्टिलाई एउटै मैदानमा भेला गरिन्छ , र सूर्यलाई पृथ्वी नजिक गरिन्छ, र सबै व्याकुल र उन्मादी जस्तो अवस्थामा हुन्छन् । अनि

भन्नेछन्: के हेरी राखेका छौ, कसैलाई खोज जसले हामीहरूको लागि सिफारिश गरोस् । अनि एकआर्का सित भन्छन्: हो आदम अलैहिस्सलाम कहाँ जाऔं, अनि सबै आदम समक्ष आँउछन् । अनि भन्छन्: तपाई सम्पूर्ण मानवजातिको पिता हुनुहुन्छ, तपाईलाई अल्लाहले आफ्नो हातले सृष्टि गरेको छ, र तपाई भित्र अल्लाहले आफै आत्मा हालेको छ, र फरिश्ताहरूलाई तपाईलाई ढोग्ने आदेश गरेको थियो । अनि सबैजना भन्छन् कि तपाई प्रत्यक्ष हेरी रहनुभएछ कि हामी कुन अवस्थामा छौं । अर्थात हाम्रो लागि अल्लाह सित सिफारिश गर्नुस् । आदम अलैहिस्सलाम भन्छन् : मेरो पालनकर्ता आज यति क्रोधित छ जति पहिला कहिले पनि थिएन, फेरि मेरो पालनकर्ताले मलाई त्यो रुखबाट रोकेको थियो तर मैले अट्टेरी गरें, र त्यस रुखको फल खाएँ, यसलेगर्दा तिमीहरू कुनै आर्का कहाँ जाऊ, नूह समक्ष जाऊ । अनि उनीहरू नूह अलैअिस्सलाम समक्ष जान्छन् र भन्छन् : हेर्नुस् तपाई त मानवजाति तर्फ अल्लाहको पहिलो सन्देष्टा हुनुहुन्छ, र अल्लाहले तपाईलाई कृतज्ञ भक्त भनेछ, तपाई नै हाम्रो लागि सिफारिश गर्नु होस् । के तपाई हेर्नुहुन्न कि हामी कस्तो दुर्गतिमा छौं । अनि नूह अलैहिस्सलाम पनि भन्छन् : मेरो पालनकर्ता आज जस्तो कहिले पनि क्रोधित थिएन र मैले आफ्नो समुदायमाथि अजाबको याचना गरेको थिएँ । यसो गर तिमीहरू कुनै आर्कासित गएर सहायता माँग, बरु इब्राहीम कहाँ जाऊ । फेरि उनीहरू इब्राहीम अलैहिस्सलाम तिर लाग्छन् र उहाँसित भन्छन् : हे इब्राहीम ! तिमी त अल्लाहको नबी र मित्र हौ आफ्नो पालनकर्ता सित

हामीहरूको बारेमा सिफारिश गर्नुस् । इब्राहीम पनि आदम र नूह जस्तै जवाफ दिन्छन् र भन्छन्: मैले तीनवटा झूठ बोलेको थिएँ, बरु तिमीहरू कुनै आर्कोसित सहायता माँग, र भन्छन्: मूसा समक्ष गई आफ्नो अभिप्राय राख । अनि उनीहरू मूसा अलैहिस्सलाम कहाँ जान्छन् र भन्छन् : हे मूसा तपाई त अल्लाहको विशिष्ट रसूलहरू मध्येका हौ, तिमीसित अल्लाहले वार्तालाप गरेको छ, तिमी नै हामीहरूको सहायता गर र हामीहरूको लागि आफ्नो पालनकर्ता सित सिफारिश गर । हजरत मूसा भन्छन् : मैले एउटा निर्दोषलाई हत्या गरेको थिएँ जसको आदेश मलाई थिएन, बरु तिमीहरू ईसा अलैहिस्सलाम समक्ष जाऊ । अनि सबैजना ईसा अलैहिस्सलाम कहाँ आउँछन् र भन्छन् : हे ईसा तपाई त अल्लाहको रसूलको साथ साथै त्यसको आत्माबाटै हुनुहुन्छ, र तपाईले त बाल्यकालमा नै बोल्ने चमत्कार गर्नु भएछ, तपाई नै हाम्रो लागि सिफारिश गर्नुस् । त ईसा अलैहिस्सलामको जवाफ पनि अरु नबीहरू जस्तै हुन्छ, र उनी सबैलाई भन्छन्: कि तिमीहरू अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समक्ष आफ्नो अभिप्राय राख । अनि सबै मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समक्ष आफ्नो अभिप्राय राख्छन् र भन्छन्: हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम तपाई त रसूलहरूको समापक हुनुहुनछ र तपाईको सबै दोषहरूलाई अल्लाहले क्षमा प्रदान गरिसकेको छ, त हे मुहम्मद हामीहरूको लागि आफ्नो पालनकर्ता सित सिफारिश गर्नुस् । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम त्यहाँबाट हिंडछन् अनि अल्लाहको अर्शमुनि आफ्नो पालनकर्तालाई ढोग्छन् र

अल्लाहको प्रशंसा र गुणगान गर्छन्, अनि उहाँसत भनिन्छ हे मुहम्मद ! आफ्नो टाउको उठाउनुस् तपाई जे पनि माँग्नु हुनेछ तपाईलाई मिल्छ, र जे सिफारिश गर्नुहुन्छ स्वीकार्य गरिनेछ। अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ कि म भन्छु " हे मेरो रब ( पालनकर्ता ) मेरो उम्मत मेरो उम्मत " अनि भनिन्छ हे मुहम्म्द आफ्नो उम्मतीका ती मानिसहरूलाई स्वर्गको दाहिनो ढोकाबाट प्रवेश गराऊ जसको हिसाब किताब हुँदैन, र यिनीहरू अरु ढोकाहरूबाट पनि प्रवेश गर्न सक्छन् । फेरि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम भन्नु हुन्छ कि " त्यस अल्लाहको शपथ जसको हातमा मेरो ज्यान छ स्वर्गको ढोकाको दुवै पाटको दूरी यति हुन्छ जति कि मक्का र हमीर अथवा मक्का र बसराको बीचको दूरी छ "। ( बुखारी )

र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम सबैभन्दा लोकप्रिय सन्देष्टा हुनुहुन्छ, र सबैभन्दा उत्कृष्ट पनि। जस्तो कि माथि वर्णन गरियो, र यसको साथ साथै समस्त सनदेष्टाको समापक पनि हुन। अल्लाहको फर्मान छ :

अर्थ : (मानिसहरू हो ! ) तिम्रा पुरुषहरू मध्ये कसैको पिता मुहम्मद ( सल्लल्लाहो अलैहे वसल्लम ) होइनन्, बरु उनी अल्लाहका रसूल र नबीहरूका समापक (अन्तिम नबी) हुन्। र अल्लाहलाई प्रत्येक कुराको पूर्ण ज्ञान छ। ( सूरतुल् अहजाब ४० )

र यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लमको विशेषता मध्ये यो पनि हो कि प्रलयको दिन उहाँको उम्मती अनुशरण गर्नेहरूको संख्या सबै नबीहरूको उम्मतीहरू भन्दा अधिक

हुनेछ । र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम नै स्वर्गको ढोका खोल्नु हुनेछ । र उहाँ नै पहिलो सिफारिशी हुनुहुन्छ । उहाँ सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ : “ म सन्देष्टाहरूमा प्रलयको दिन सबैभन्दा अधिक उम्मतीवाला हूँ , र म पहिलो व्यक्ति हूँ जसले स्वर्गको ढोका खटखटउने छु ” । ( मुस्लिम )

र आर्को ठाउँमा रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ: “ म स्वर्गमा पहिलो सफारिशी हुनेछु, र जसरी मेरो अनुशरण गरियो कुनै अरु सन्देष्टाको यस्तो अधिक मात्रामा अनुशरण गरिएन, बरु प्रलयको दिन कतिपय यस्ता नबीहरू पनि आउँछन् कि उनको साथमा एउटा अनुयायी मात्र हुनेछ ” । ( मुस्लिम )

र अल्लाहले उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई यो वाचा दिएको थियो कि अल्लाह उहाँको उम्मतीहरूमा उहाँलाई स्वीकार्यता र लोकप्रियता प्रदान गर्छ, र उहाँलाई उनको उम्मत भित्र कल्याण देखाउँछ । र रसूल सल्लल्लाहो अलैहे वसल्लमको एउटा हदीसमा वर्णन छ कि रसूल सल्लल्लाहो अलैहे वसल्लम एक दिन सन्देष्टाहरूको वर्णन गरिराख्नु भएको थियो, अनि आफ्नो हात उठाउनु भयो र भन्नु भयो “ हे अल्लाह मेरो उम्मत मेरो उम्मत, र रुन थाल्नु भयो, फेरि अल्लाहले भन्यो हे जिब्रील मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समक्ष जाऊ र तिम्रो पालनहारलाई सबै थाहा छ तर जाऊ र मुहम्मदसित सोध कि उहाँ किन रोई रहनु भएछ । अनि जिब्रील मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समक्ष आएर सोधे त मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले

जुन भन्नु थियो भन्नु भयो । र अल्लाहलाई त सबै थाहा नै थियो । अनि अल्लाहले जिब्रीलसित भन्यो मुहम्मद समक्ष गई भन कि हे मुहम्मद हामी तिमीलाई तिम्रो उम्मतमा लोकप्रिय बनाई दिनेछौं, र तपाईलाई तिम्रो उम्मतीहरूको बारेमा संतुसष्टि प्रदान गर्ने छौं र तिमीलाई अपमानित गर्ने छैनौं " । ( मुस्लिम )

र अल्लाहले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई अरु सन्देष्टाहरू माथि ६ वटा कुराहरूमा प्रधानता प्रदान गर्‍यो । रसूल सल्लल्लाहो अलैहे वसल्लमको भनाई छ : " मलाई ६ वटा कुराहरू द्वारा अरु सन्देष्टाहरू माथि प्रधानता प्रदान गरियो, मलाई जवामेउल् कलिम ( वाक्य प्रयोग गर्ने विचित्र शक्ति ) प्रदान गरियो, र (शत्रुमाथि) भयद्वारा मेरो सहायता गरियो, र माले गनीमत ( युद्धमा मिलेको सम्पत्ति ) मेरो लागि हलाल गरियो, र समस्त पृथ्वीलाई मेरो लागि पवित्र र नमाजको स्थल बनाइयो, र मलाई समस्त जगततर्फ सन्देष्टा बनाएर पठाइयो, र मलाई समस्त सन्देष्टाहरूको समापक बनाइयो " । ( मुस्लिम )

अर्थातः मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम भन्दा पहिलाका दूतहरू मात्र आफ्नो समूह र जातिका लागि पठाइन्थे तर मुहम्म्द सल्लल्लाहो अलैहे वसल्लमलाई सम्पूर्ण जगतको लागि रसूल बनाइयो । अल्लाहको फर्मान छ :

अर्थ : तपाईले भनिदिनुस् : "हे मानिसहरू ! म तिमीहरू सबैको लागि त्यस अल्लाहबाट पठाइएको रसूल हूँ जो आकाशहरू र धर्तीको राज्यको स्वामी छ । उस बाहेक कोही सत्य पुज्य छैन, उसैले जीवन प्रदान गर्दछ र उसैले

प्राण लिन्छ । तसर्थ अल्लाह माथि ईमान ल्याऊ र उसका नबी उम्मीमा, जो स्वयं अल्लाह तआला र उसका आदेशमा आस्था राख्दछन् । उनको अनुशरण गर ताकि तिमी (सही) मार्ग पाउन सक ।'' ( सूरतुल् अअ्राफ १५८ )

र आर्को ठाउँमा अल्लाहको कथन छ :

अर्थ : (हे मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम ) हामीले तपाईंलाई सबै मानिसहरूको लागि शुभ-सूचना दिनेवाला र सावधान गर्नेवाला बनाएर पठाएका हौं, किन्तु यो सत्य हो कि धेरै मानिसहरूले बुझ्दैनन् । ( सूरतु सबा २८ )

र यस्तै अल्लाहले आफ्नो कृपाले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमका अनुयायीहरूलाई सबैभन्दा राम्रो र लाभदायक बनायो । अल्लाहको फर्मान छ :

अर्थ : (मोमिनहरू !) मानिसहरूका लागि पैदा गरिएको सबै सम्प्रदायहरू मध्ये तिमीहरू सबैभन्दा उत्तम हौ किनकि सत्कर्म गर्न भन्दछौ र दुष्कर्मबाट टाढा रहन सिकाउँदछौ र अल्लाहमाथि आस्था राख्दछौ र यदि अहले किताबले पनि आस्था राखेको भए तिनीहरूको निम्ति धेरै राम्रो हुने थियो । तिनीहरू मध्ये ईमानवालहरू पनि छन् र धेरै जसो अवज्ञाकारीहरू छन् । ( सूरतु आले इम्रान ११० )

रसूल सल्लल्लाहो अलैहे वसल्लम भन्नु हुन्छ कि मलाई यस्ता कुराहरू प्रदान गरिएको छ जुन कुनै सन्देष्टालाई प्रदान गरिएको छैन, त सहाबाहरू उहाँका साथीहरू भन्छन् कि हामीले सोधें कि ती कुराहरू के हुन् ? त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : " मेरो सहायता ( शत्रुहरू विरुद्ध ) भयद्वारा गरियो, र पृथ्वीका साँचोहरू मलाई प्रदान

गरियो, र मेरो नाम अहमद ( प्रशंसनीय ) राखियो, र पृथ्वीलाई मेरो लागि मस्जिद बनाइयो, र मेरो उम्मतीहरूलाई सबैभन्दा राम्रो उम्मती बनाइयो " । ( मुस्नद अहमद )

रसूल सल्लल्लाहो अलैहे वसल्लम २३ वर्ष सन्देष्टाको रूपमा जीवित रहनु भयो, फेरि उहाँको स्वर्गबास भयो, रसूल सल्लल्लाहो अलैहे वसल्लमले यस सानो अवधिमा ती सबै निर्देशनहरूलाई पूर्णतः आफ्नो उम्मत सम्म पुऱ्याउनु भयो जुन उहाँलाई अल्लाह द्वारा प्रदान गरिएको थियो । र आफ्नो उम्मतलाई यस्तो प्रकाशित मार्गमा लगाउनु भयो जसको रात्री पनि दिन जस्तै उज्जवल थियो । र उहाँको मृत्यु भन्दा अघि नै पूरा अरबमा इस्लाम विस्तार भइसकेको थियो । र आफ्नो अनुयायीहरूलाई यो आदेश दिएर जानु भयो कि उहाँको आदर त गरुन् तर यस्तो आदर नगरुन् जसरी यहूदी ईसाईहरूले गरे र आफ्ना रसूलहरूलाई पूज्य नै बनाई हाले । रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : " मेरो प्रशंसामा यस्तो गोलू ( प्रशंसामा सीमा भन्दा अगाडी जानु ) नगर्नु जस्तो कि ईसाईहरूले ईसा अलैहिस्सलामको बारेमा गरे, म अल्लाहको सेवक हूँ तसर्थ तिमीहरू मलाई अल्लाहको भक्त र त्यसको रसूल नै भन " । ( बुखारी )

तसर्थ मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमका अनुयायीहरूले उहाँको कुरालाई मानी हरेक कुरामा उहाँको अनुशरण गरे । र उहाँको सहायता गरे, र उहाँसित आफ्नो सन्तान भन्दा अधिक प्रेम गरे, र उहाँको समर्थनमा आफ्नो ज्यान माल मात्र होइन बरु आफ्नो सन्तानलाई पनि बलिदान गरे । र यसको प्रत्यक्ष उदाहरण सहाबाहरू हुन् ।

र यस्तै यो धर्म इस्लामको यो पवित्रता र महानता हो कि यसले सबैलाई यो आदेश दिएछ कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको अधिकारको ज्ञान प्राप्त गरुन् , र यस्तो पूजा अराधना अनिवार्य गऱ्यो जसबाट मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आदर होस् । त्यसै मध्ये यो हो कि कुनै पनि व्यक्ति त्यस बखत सम्म मुसलमान हुन्सक्दैन जब सम्म मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई अल्लाहको सन्देष्टा स्वीकार नगरोस् । र त्यो कलेमा ( मन्त्र ) यो हो **लाइलाहा इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाह** अर्थात : अल्लाह बाहेक अरु कुनै पनि सत्य पूज्य छैन, र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम अल्लाहको रसूल ( सन्देष्टा ) हुन् ।

र यस्तै मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम सित प्रेमगर्नु अनिवार्य छ, र उहाँको प्रेम सबैको प्रेममाथि उत्कृष्ट होस् । अर्थात आफ्नो बाबु आमा सन्तान सबैभन्दा अधिक प्रेम गर्ने आदेश छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ : “ कुनै मान्छे तब सम्म आस्थावान हुन्सक्दैन जब सम्म म उसको निकट उसको सन्तान, बाबु, आमा र समस्त मानवजाति भन्दा अधिक प्रिय न भइहालूँ ” । ( बुखारी )

र यस्तै अल्लाहले हामीलाई खबर दियो कि अल्लाह र फरिश्ताहरू मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि अल्लाहको शान्ति पठाउँछन् र अल्लाहको यो आदेश जारी गर्छन् कि तिमीहरू पनि उहाँमाथि शान्ति पठाउँदैगर । अल्लाहको फर्मान छ :

अर्थ : अल्लाह र उसका फरिश्ताहरू यस नबीमाथि रहमत (सलाम-शान्ति) पठाउँदछन् । हे ईमानवालाहरू तिमी

पनि उनीमाथि धेरै सलाम र दरूद पठाउने गर । ( सूरतुल् अहजाब ५८ )

र यस्तै अल्लाहले यो आदेश दिएको छ कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आदेशको पालना गर । र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको अनुशरण गर्नुलाई उहाँसित प्रेम गर्नुको लक्षण र कसौटी पनि बताएको छ, र यो पनि भनेको छ कि जसले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको अनुशरण गऱ्यो भने त्यसले अल्लाहको अनुशरण गऱ्यो । अल्लाहको भनाई छ :

अर्थ : (हे पैगम्बर ! मानिसहरू सित) भनिदिनुस् कि यदि तिमी अल्लाहलाई प्रेम गर्दछौ भने मेरो अनुशरण गर, अल्लाहले तिमीलाई प्रेम गर्नेछ र तिम्रा पापहरूलाई क्षमा गरिदिनेछ र अल्लाह अत्यन्त क्षमा-दान गर्ने दयालु छ । ( सूरतु आले इम्रान ३१ )

र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको अनुशरणलाई अल्लाहको अनुशरणबाट दाँजिएको छ जस्तो कि अल्लाहको फर्मान छ :

अर्थ : भनिदिनु ! कि अल्लाह र रसूलको आदेश पालन गर । यदि मान्दैनन् भने अल्लाहले पनि काफिरहरूलाई प्रेम गर्दैन । ( सूरतु आले इम्रान ३२ )

**हे अल्लाह** आफ्नो प्रिय भक्त एवं सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई शान्ति प्रदान गर, र उहाँको सबै साथीहरू र हामीमाथि पनि । र हामीलाई उहाँको अनुशरण गर्ने शक्ति प्रदान गर, र हामीलाई उहाँको हौजे

कौसरबाट जल प्रदान गर, र हामीलाई उहाँको शिफाअत प्रदान गरी हामीलाई स्वर्गमा उहाँको साथ स्थान दिएर उहाँको साथ बस्ने सौभाग्य प्रदान गर । ( आमीन )

# समाप्त

*अनुवादक*

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगर पालिका वॉड नं.९**

**महुवा तौलिहवा कपिलवस्तु**

**नेपाल**

Mob. No.00977-9847030780

00966-0501372254